१९८१ सालको

## करिया अभिलेख गर्ने "स्पीच"

चित्तरञ्जन नेपाली (नारायणप्रसाद राजभण्डारी) को सौजन्यताबाट नेपालबाट दास प्रथा उन्मूलन गरिएको यो लोपोन्मूख ऐतिहासिक दस्तावेज पाठकहरुसमक्ष राख्न कानून सफल भयो । नेपालका सबै प्रमुख पुस्तकालय र इतिहासविद्हरुबाट प्राप्त हुन नसकेको यो ८० पृष्ठको पुस्तिका १९८१ साल मङ्सिरमा प्रकाशित भएको हो ।

नेपाल राजकीय प्रज्ञा प्रतिष्ठानले २०५८ सालमा प्रकाशित गरेको, *नेपालको इतिहासका विविध पक्ष* भन्ने पुस्तकको २३ सौं लेखका रुपमा चित्तरञ्जन नेपालीद्वारा लिखित लेखका अनुसार यो 'स्पीच' को मस्यौदा बडाकाजी मरीचिमान एवम् नायव बडागुरूज्यू हेमराजले तथा साफी ख. रूद्रप्रसाद राजभण्डारी (चित्तरञ्जन नेपालीका जेठा बाबु) ले गर्नु भएको हो । उहाँकाअनुसार यसको मस्यौदा साफी सिँहदरबार कैलाश भवनमा गोप्यरुपमा गरिएको थियो ।

कमलमणि दीक्षितले दिनुभएको जानकारीअनुसार यो पुस्तिकाको दुई संस्करण छापियो । पहिलो संस्करणमा स्पीच गरिरहेको तस्वीर तथा फिरिस्त (अनुसूची) थिएनन् । हामीले दोस्रो संस्करणका रुपमा प्रकाशित पुस्तिकालाई यहाँ प्रकाशित गरेका हौं ।

तथ्य, अध्ययन, अनुसन्धान र तथ्याङ्क संकलन समेतका आधारमा अत्यन्त विश्लेषणात्मक यो स्पीच दास प्रथा हटाउन जनमत सिर्जना गर्न गरिएको प्रयास हो । यसैको फलस्वरुप १९८२ साल वैशाख १ गते मुलुकी ऐनमा संशोधन गरेर दास प्रथा उन्मूलन गर्दै यसलाई २० वर्षसम्म कैद हुने अपराध घोषित गरियो । यो संशोधित कानूनको पूर्ण पाठ निम्नानुसार छ :-

१ नं. ।। अनेक किसिमको दुःख पिरले वास गरेको दासत्व प्रथा मुलुकबाटै उठाईदिनाको पवित्र उद्देश्यले सदर मध्येश पाहाड् गैह्र यस राज्यभरका कमारा कमारिहरुको लगत खडा गरी अैलेसम्म कमारा कमारी भइरहेका बालख जवान बुढा जम्मै करियालाई सर्कारबाट ऐनवमोजिमको मोल तिरी आफूखुशी गराईदिई आजसम्म चली आएको मासिने जात भन्ने प्रथा र सो मासिने जातको कुरो परी आएमा यसो गर्नु भन्ने ऐनमा लेखिएको प्रथासमेत सच्याई दासत्वप्रथा नै यस मुलुकबाट उठाईदिएको हुनाले सम्वत् १९८२ साल वैशाख १ गते रोज २ देखी उप्रान्त यो नेपालराज्यभरमा ई अमलेख भएका ज्यूलाई वा इनका सन्तान दरसन्तानलाई अथवा अरू कसैलाई समेत अव कसैले

कमारा कमारी भनि किन्बेच गर्न र अरू कुनै किसिमबाट हक दावी गरी व्यवहार गर्न औं विदेस्बाट खरीद गरी ञाहा ल्याई करिया गराई राख्न किन्न बेचन व्यवहार गर्नसमेत हुँदैन. कसैले गऱ्यो भने सो गर्नेलाई किन्बेच गरेको थैली जफत गरी जनही ७ वर्षका दर्ले कैदै गर्नु. लेखिएको अपराध फेरी पनी उसै मानिसबाट हुन गयो भने दोश्रो पटकलाई पैल्हा पटकमा हुने लेखिएका सजायको डेढो तेश्रा पटकलाई दोश्रो पटकमा हुने सजायको डेढो यस्तै हिसाबले सजाय पटक बढाउँदै लगी जनही २० वर्ष नपुगेसम्म कैदै गर्नु. इ आफुखुसी भए जातको अरू कुरो परी आएमा ऐन भएकामा ऐनबमोजिम र ऐन नभएकामा पानी चल्ने जात भए मतवाली घर्तिजातका ऐनबमोजिम र पानी नचल्ने जात भए जुन् जातको मानिस हो. उसै जातका ऐनबमोजिम गर्नु.

२ नं. ।। नातेदारले वा अरू कसैले पनी हाम्रा सरहदका मानिस विराना मुलुकमा लगी बिक्री गर्न लाउने र बिक्री गर्नालाई भनी लान पठाउनसमेत हुँदैन. कसैले गरे देहायबमोजिम सजाय हुन्छ :-

बिक्री गर्ने गर्न लाउनेलाई ५०० रूपैया दण्ड गरी ७ वर्ष कैद गर्नु. ........................................१

बिक्री गर्न भनी लगे पठाएकोसम्म रहेछ. बिक्री गर्न पाएको रहेनछ भने ७ वर्ष कैद गर्नु. ........................................२

आफ्नु स्वास्नी आफैले बिक्री गरी सकेको भए यसै महल्का ४ नम्बरका ऐनबमोजिम गर्नु. बिक्री गरी नसकेको लगे पठाएकोसम्म रहेछ भने ७ वर्ष कैद गर्नु. ........................................३



३ नं. ।। हाम्रा सरहदका मानिसलाई ललाई फकाई वा अरू कुनै किसीमबाट पनी बिराना मुलुकको कोईलाखानी र समुद्रपार लान पठाउन हुँदैन. कसैले लगे पठाए सो लाने पठाउनेलाई कोइलाखानीको कुल्ली कांम्मा भए ७ वर्ष समुद्रपार भए १० वर्ष कैद गर्नु.

२९ अगष्ट १९२६ को *पायनियर* पत्रिकाकाअनुसार त्यसबेला दासहरुलाई मोचन गर्न ३६ लाख ७० हजार रुपैञा लागेको थियो। यो रकम पशुपतिनाथको आम्दानीबाट व्यहोरिएको थियो। मुक्त भएका ५९ हजार ८७३ मध्ये ५१ हजार ७८२ हकमा सरकारले प्रति व्यक्ति सरदर रू. ७०/- का दरले क्षतिपूर्ति दिएको थियो भने ४ हजार ६५१ लाई तिनका मालिकहरुले बिनाक्षतिपूर्ति अमलेख गरेका थिए। १ हजार ९८४ जना दासहरु मरे भने १ हजार ३४२ भागे र ११४ जनाले आफ्नो मोल आफैं तिरे।

पुस्तिकामा रहेका टट्कारै देखिने १९ वटा मुद्रण त्रुटिहरु भने हामीले सच्याएका छौं ।

**श्री ३ महाराजबाट करियाहरूलाई अमलेख गराउने बारेमा बक्सेको स्पीच**

संवत् १९८१ साल मार्ग १४ गते शुक्रबारका दिन श्री ३ महाराज चन्द्रसम्शेर जङ्गबहादुर राणा जि.सि.बि., ज.सि.एस्.आई., जि.सि. एम्.जि., जि.सि.भि.ओ., डि.सि.एल.थोङ-लिङ-पिम्मा-को-काङ-वाङ-म्यान प्राइम्मिनिष्टर आण्ड मार्शलबाट भारदार, अफिसर र भलादमीहरू जम्बागरी करियाको अमलेख गर्ने बारेमा विचार गर्नालाई टुँडिखेलमा बक्सेको स्पीच

सज्जन हो !

आज यौटा असजिलो कुराको विचारलाई यो भारादारी कचहरी जोरिएको छ. बराबर उन्नत्ति हुँदैरहेको यो संसारमा बखत बखतमा अनेक फेरफारहरू पनी हुँदै गइरहेका छन्. रहँदावस्ताको रीतमा होस्, छरछिमेकी सँगको व्यवहारमा होस्, देशव्यवस्थामा होस्, यति मात्र होईन घर गृहस्थको चाँजो पाँजोमा समेत यही चाल छ. हाम्रो मुलुक, हाम्रा प्रजाहरू पनी अघि भन्दा अहिले निक्कै नै अगाडी बढी दुनियाँका नजरका साम्ने पर्न आइरहेछन्. यसैले पनी आफ्नो जो भइरहेको जातीय गौरव नघटाई खडा राख्ने उत्साह हामीले राखी रहनुपर्दछ. यिनीहरू बहादुर हुन, हक्की पनी छन्, दयालुशील स्वभाव यिनमा छ भन्ने नाम गोरखालीले राखी आएका छन्, फेरी निर्धा निमुखा र अत्याचारमा परेकोहरूको बराबर उद्धार गर्ने, शयकडौं लडाइँका वीर भन्ने कीर्ति पनी हाम्रा पुरुषाहरूको छ. त्यो नाम र त्यस्ता पुरुषाका सुहाउँदा सन्तान यिनीहरू हुन् भन्ने कीर्तिलाई हामीले धमलिन दिन हुँदैनथ्यो ता पनी अहिलेको सभ्यसंसारका मुख्यांजी त्यो नाम, त्यो शुभ कीर्तिको चहक मलिन गर्ने नराम्रो कलंक हामीहरूमाथी लागिराखेको छ. यो कलंक, दासत्वको निर्घिन चलन अझसम्म हामीमा रहिरहेको हुनाले नै लागेको हो. आफ्नो स्वतंत्रतामा रत्तिभर पनी अर्काको दबाउ सहन नशक्ने हामीले आफै मध्यका कसैलाई नीच दासत्वको बन्धनमा राखी तिनका पुस्तानपुस्तालाई पनी त्यही अवस्थामा रहन दिइरहेछौं, यो चलन हाम्रो चहकिलो संप्रदाय सुहाउने होईन ता पनि यस्तो चलनलाई नामेट गर्ने उपाय पट्टी हामीहरू कत्ती पनी लागेका छैनौं. ३० वर्ष जति अगाडी जंजीवार र पेम्बा भन्ने टापूहरूमा र, ७५ वर्ष जति अगाडी मारिशस र, अंग्रेजका अरु नयाँ वस्तीका मुलुकहरूमा पनी यो चलन चलेकै थियो, त्यस्तै अघि अघि अरु ठाउँ ठाउँमा पनी रहेकै हो. उहाँका करियाहरूलाई तिनका मालिकहरूले जत्तिको साह्रै दुःख दिन्थे, त्यत्तिको ता हामी गर्दैनौं, हामी सँग त्यतिका धेरै करिया पनी छैनन्, तिनका र हाम्रा करियामा आस्मान जमीनको फरक छ भन्न शकिन्थ्यो, तर जेसुकै भए ता पनी अरु ठाउँमा

यो चलन उठिसकेको र हाम्रै देशमा पात्र अझ सम्म पनी कायम रहिरहेकोले हाम्रा करियाहरू नामै सम्मका मात्र भए ता पनी यो करियाको चलन रहेकाले हाम्रो मुलुकलाई नराम्रो पारिरहेको छ.

धेरै अघिका समयमा लढाइँ हारजित हुँदा जित्नेले हार्ने पट्टीका मानीसवाट अरु फायदा उठाउने बाटो नदेखी तिनीहरूलाई करिया तुल्याई काम लिई तिनका संतान-दर संतानसम्मलाई समेत करिया गराई राख्ने गरेकाले यो चलन त्यहाँदेखि चलेको हो भन्ने कुराको यहाँ वेलिविस्तार गरिरहनाको प्रयोजन छैन. लडाइँ हारी हरूवाहरूको करिया गरिएका हुन् भनी पुराणहरूमा कहिएको छ । तिनका संतान करिया भइराखेकाको अहिले नाम निशानै छैन. कुनै बखत, यूनानीहरूले, फेरी कुनै बखत रुमीहरूले दिग्विजय गरेथे त्यो वेलाको र परपुर्वकालदेखि लिएर हिन्दुस्थान माथी बाहिरिया राजाहरूका कैयौं चढाइ भएका छन्. अधिपति हुने मन्सायले गरेका लडाइँहरूमा लुट, पीट, ध्वंस, विध्वंस गरी जितबाजीमा वैरीहरू पक्री बडो सेखी सान सँग भडक देखाई सर भएका मुलुक र शहर भित्र पस्ने, हार्नेलाई दास दासी गराउने र अर्का थरीको मौका पर्दा पहिला थरी दासत्वबाट छुटी नयाँ थरी दासत्वमा पर्ने चलन हुन गएकोले करियाहरू कहिले बढ्ने, कहिले निर्मूल भए जस्तो हुने, कहिले बदलिने गरेका कुराहरू इतिहासमा पाईन्छन्, हुँदा हुँदा आखिरमा यसमा रहेको असत् व्यवहारले सार्‍है कठोर निर्दय भनी कहलिन गएको यो चलन, लोकहितमा तत्पर रहेका सज्जनहरूका सहाराले आजकाल सभ्यताले वास गरेका दुनियाँ भरका सबै ठाउँमा हराइसकेको छ.



कंगालीलाई अनिकालले आखिर पारेमा पनी ज्यू मासिन जान्थ्यो, यस्तोमा दामको लोभले होईन कि पेट पाल्न नशकी प्राणान्त भइरहेका गरीब आमा बाबुले छोरा छोरी भन्न नपाई बेच्ने गर्दा ती बेच्ने बेचिने दुवैको प्राण पाल्नाका लागी मरे पछी मात्र हुने बियोग, तिनका जिन्दगीको बीचैमा हुने गर्थ्यो. यसरी लडाइँमा हात परेका वैरीहरू बलजफत सँग मासिन गएका र खान नपाई प्राण अड्याउनका लागि मासिन गएका बाहेक ज्यू मासिनाको बाटो अरु पनी थियो, तर त्यो बाटो सार्‍है निषिद्ध किसिमको हो. हाम्रो धर्मशास्त्रले पनी दासत्वको चलन रहनैपर्छ भन्दैन. यो चलन जानाले धर्मलाई हानि हुने र रहनाले असल हुने पनी केही होईन, तर धर्मले जस्तै यस चलनले हाम्रो व्यवहार-व्यवस्थामा प्रभाव पारिराखेको देखिन्छ.

हो. दास दासीको चलन साह्रै पुरानो हो ता पनी हाम्रा धर्ममार्गको आवश्यक अंग भई रहेको होईन. कद्रु- विनता, राजा हरिश्चन्द्रको र त्यस्तै अरु अरुका कथाहरू पनी पुराणहरूमा कहिएका छन्. यी कथाहरूका कुरालाई छाडिदिऊँ. गृहस्थले करियालाई यसरी राख्नुपर्छ भन्ने नियम तन्त्र

धर्मशास्त्रहरूमा पाइन्छन्. ती नियमहरूले पनी करियाहरूमा दयामाया राख्नैपर्छ भन्ने कुरामा जोर दिएको देखिन्छ. त्यही हिसाव सँग अवस्थाअनुसार दास दासीका बारेमा ऐन पनी बनेका छन्. पगालेका असल कंसल धातुहरू एक ज्यू मिले झैं हाम्रा घर गृहस्थीको अरु चलन सँग यो दासत्वको चलन मिली बढिया रीत-रिवाजको भान पर्न गइरहेको छ. रीत रिवाजहरू बहुधा जातीय स्थिति थाम्ने किसिमका हुन्छन्, तर सबै रीत रिवाज सधैं एकनास सँग रहेका हुँदैनन्. पछि पछि बेकामको देखिन लागेको जति लोप गरिँदै गई, अथवा हराउँदै गई समय अनुसार काम लाग्ने नयाँ रीत-रिवाज चल्दै आउँछन. यस्तै तरह सँग कुनै बेला कोही, कुनै वेला कोही, रीत चलेका हुन्छन्. शास्त्रमा बाधा खाँदैन भने त्यस्ता रीत-रिबाजहरू फेर्न हुन्छ भन्ने सम्मति गैह्र विद्वान् पण्डितहरूको छ. यो दासत्वको चलन पुरानो हो त के भयो, त्यसमा फेरफार वा त्यसको लोपै गरे पनी हुन्यै हो भन्ने तात्पर्य यसबाट निस्कन आउँछ. प्रजा प्राणी समाज र मुलुकैको पनी विगार गर्ने कुनै चलन चलिरहेको देखियो भने सबका हितको खातिर त्यस्तो चलनलाई बदल्नु अथवा एकदम उडाइदिनु नै उचित पर्दछ.

यस मुलुकमा दासत्वको चलनले दास-दासीहरू माथी र अरु दुनियाँदार माथी पनी कस्तो असर पारेको र पार्दै रहेको होला, यस कुराको विचार हामीले अवश्य राख्नु पर्ने बेला आइरहेछ. करियाका मनले यो चलनलाई कस्तो मानेको हुँदोहो भन्ने कुराको हकमा के ती करियाहरूको दिल तिनका आफूसुखी स्वदेशी भाइहरूको जस्तो यता उतीका विषयहरूमा लाग्न शक्ने होला त ? . आफूसुखी तिमीहरूको बाल्यावस्था, पिता माता बंधुबर्गका स्नेहसाथको पालन पोषणमा वितेका हुन्छ, केही ठुलो भए पछि तिमीलाई तालिम गर्ने र उहाँ पछि यौटा असल काम इलममा लगाइदिने धंदा पनि तिनैले गरिदिएका हुन्छन्. घर गर्न सक्ने भए पछि तिमीहरू जहान परिवारवाला भई आफ्नो घरबार जोर्ने काम काज गर्ने हुन जान्छौ, अथवा पिता-माताहरू सँगै वसी उनको सेवा टहल गरी आफू बालक छँदा उनले याद विचार राखी जसरी पालन पोषण गरेथे उस्तै उनका बुढेसकालमा उनीहरूलाई गरिरहने होलाऊ. सज्जन हो ! हेर, कसरी यस्ता तरहले क्रमै सँग बालक अवस्थादेखि तिमीलाई आफ्नो अभिभाराको ज्ञान बढ्दै जाने गर्दो रहेछ. बुढा बुढी पिता मातालाई मुफत्को भालू सम्झनु परै राखी तिनमाथी कसरी झन् झन् प्रेम बढ्दै जाने गर्दो रहेछ. तिनै माता पिताका शिक्षा उपदेश दिल् भित्र गडी आफ्नो घर द्वारमा जत्तिकै आफ्नो मुलुकमा पनी तिम्रो प्रेम वस्न जाने गर्छ. तिम्रो मुलुकको निन्दा कसैले गरेमा आफ्नो घरैलाई निन्दा गरे जत्तिकै ननिको तिमीलाई लाग्ने हुन्छ. कोही छिमेकी बढ्दो चढ्दो देखेमा आफू पनी उत्तिकै हुने उद्योग गर्ने तिमी हुन्छौं. कमाउँला, कमाइ गरी फर्की आए पछि आफ्ना प्यारा बाल बच्चा सँग रहुँला भन्ने आशा हुनाले तिमीलाई काम तिरको उत्साह बढ्ने

हुन्छ. वाहिरबाट आउँदा झुत्रोझाम्रो छाप्रै होस वा भारी ठुलो इमारतै होस, आफ्ना घरको गल्लीमा पुग्ने वित्तिकै बालबच्चा सँग भेट हुनलाग्यो भन्ने खुशीले तिम्रो दिल भरिन जान्छ. आफू निस्किराखेको वेलामा घरमा कसैलाई केही हुन गएको छ कि भनी तिम्रो मन तुल्बुलिन थाल्दछ. घरको सँघार नाघी घर भित्र पसी जहान सवै सँग जसै भेट हुन्छ अनी आफ्ना लाला-बालामा प्रेम देखाई आनन्द मानी सुख सँग तिमी वसेका हुन्छौं.

अब एकपल्ट करियाहरूलाई सम्झी हेर, सके त्यो बालक कालैमा बिकेको होला, बाबु आमाको अत्तो पत्तो त्यसलाई केही हो ओईन, आफ्ना छोरा छोरीलाई प्यारो गरी तिमीले लिए खेलाएको त्यसले बडो चाह सँग हेरिरहँदोहो, तिमी दयालु हुनाले दया राखी त्यसै सँग पनी १/२ मिठो वचन वोल्दा हौ, तर करिया माथीको मालिकको दया र बाबु आमाका छोरा छोरी उपरको स्नेहमा फरक त्यसले नदेखिर होइन. मेरा पनी आमा बाबु हुँदा हुन्. छँदै थिएनन् कि ? थिए भने कहाँ होलान् ? सँगमा किन छैनन् ? भनी त्यो मन मनै भन्दो हो. यसरी कलिलो बुद्धिको हुँदा कुराको अन्त पाउन नशकी त्यसको मनमा अनेक तरहको कुरा बराबर खेल्न थाल्दो हो. मन भरङ्ग हुँदो हो. हुँदा हुँदा आफू र अरुमा रहेको फरक सम्झन शक्ने त्यो हुन जान्छ. जति उमेर बढ्दै गयो उति त्यो समाज झन् झन् दृढ हुँदै गई न यता, न उता, कौने कुरामा, न मालिकको काज काममा न छरछिमेकी सँगको व्यवहारमा, न आलाम दुनियाँ सँगको वास्तामा, कहीं कतै त्यसको चित्त स्थिर रहन नशकेकोले त्यो सबै अन्धकारमय देख्न लाग्दछ. यस्ता तरहले त्यसको वाल्यवस्था वित्तछ तिमीहरूको जस्तो बाल्यावस्था त्यसको वितेको हुँदैन. तिम्रा छोरा छोरीहरू सँग रहँदा तिनका संसर्गमा जो रस वस गर्न पायो, जिन्दगी भरको रस वस भन्नु त्यसलाई त्यत्तिकै हुन्छ. उमेरदार भए पछि म यस्तो पो रहेछुं भन्ने ज्ञान त्यसलाई भइसक्तछ. घरका अरु संपतिको गन्तीमा त्यो रहेको हुनाले त्यसका निम्ती खर्च धेरै पर्न गइ नुक्सान होला भनी खर्च कस्नामा पनी बाँकी रहेको हुँदैन. तिमीहरूले पनी आफ्ना जहान बच्चा पाल्नै पर्ने हुनाले त्यसो नगरी निर्वाह पनि हुँदैन. उमेर पुगेका करिया खेतीपातीमा लगाइन्छन्, शिकाइन्छन्, सधाइन्छन्, दयामाया नराखी दुःख पीर दिई करकापले मात्र काम नबन्ने हुनाले अलिकति दयामाया पनि राखिन्छ, तर आफ्नो सच्चा अवस्था देखेर त्यसको मन सान्है खस्कन जान्छ. म कमारो हुँ, कहिल्यै नछुट्ने बन्धनमा परेको छु, दासत्वको डाम मेरो पुर्पुरामा रहेको छ भन्ने कुरा त्यसको दिलमा परिरहेकै हुन्छ. यता आफ्नो दशा त्यस्तो, उता आफू सँग सँगै काम गर्ने मानो ज्यालादारीको उँचो मानको पगरी पहिरिराखे जस्तो उज्यालो मुख गरी पाकेको मजुरी लिई घरमा लगी आफ्ना जहान बच्चा पालौंला भन्ने ख्यालले आनन्द मानी काम गरिरहेका आसपासैमा रहेका खेतालाहरूलाई देख्त छ,

काम सके पछि ती सबै जना आफ्ना आफ्ना घर फर्कन्छन्, त्यस बेला घर गई लालाबालालाई खुवाई खाई आनन्द मानी रहेका ती ज्यालादार खेतालाको र बबुरो आफ्नो भन्नु कोही केही नभएको करियाका मनको लहरमा कत्तिको फरक हुदा हो, आँफै विचार गर. त्यसको मुख मलिन नभई रहोस् कसरि ? . जोडामा बाँधिदिए घरको माया गर्ने होला भनी यौटी कमारी ल्याई जोडी बाँधिदिए पनी त्यसबाट जन्मेका छोरा छोरी बेची फायदा उठाउने धूर्तबुद्धि मालिकले राखेका हुनाले बिचारो करियालाई संतोष धैर्य मिल्नु त्यत्तिकै हुन्छ. मैले गरेको कमाई मेरो भन्न म पाउँदिनँ, अरु कुरा परै रहोस, जोई छोरा छोरी समेत आफ्नो भनी रहन पाउने म होइनँ भनी त्यसले नजाने नबुझ्ेको हुँदैन. मालिकलाई गाह्रो साह्रो परेमा कमारा कमारी बेच्ने काम नै पहिले हुनजान्छ. मालिकले करियाको सवै जहान पाल्न नशकेमा पनी पहिले तिनै बेचिने हुन्छन्. त्यसरी जोई सँग पोई र आमा सँग छोराछोरी रहन नपाउने हुन गई बबुराहरूको बिचल्ली होइहाल्दछ. राजा हरिश्चन्द्रको कथा तिमीहरू धेरैले पढे सुनेकै होलाऊ. तिनले निर्दयी विश्वामित्रको हठमा परी आफ्नो प्रतिज्ञा पाल्नाका लागि रानी, छोरा र पछि आफू समेत बेचिनाको संकष्ट आइपर्दा दास दासी भई अनेक भुक्तमान सहनुपरेको सबै संझनानै होला त्यस वेला जहान सँगको विछोड् र अरुको करिया भई बस्नु परेका कडा दुःखमा डुबी आँशु बहाई तिनले बिलौना गरेका देखी दया जागन गई देवताहरूले तिनको उद्धार गरिदिएथे. अहिलेको यो कलियुगमा करियाले साह्रै दुःख मानी आँशु त के आँखाबाट बराबर रगतको धार वगाई बिलौना गरेता पनि उस बखतका विश्वामित्रले देखाए भन्दा पनि साह्रो ढुँगा जस्तो हाम्रो यो दासत्व चलनको कठोर छाती पग्लँदैन. त्यस्तो अवस्थामा करियाले मनुष्ययोनिलाई धिक्कार सम्झँदोहो त्यसले सारा जगतै अँध्यारो देख्न लाग्दो हो. यी मेरा मानिस, यो मेरो मुलुक, मलाई यो अभिभार छ भन्न नशकी क्रमै सँग त्यो मानिस होइन कि पशु र निर्जीव वस्तुको गन्तीमा पुग्न जान्छ भन्नामा के आश्चर्य छ ? . यिनै दासहरूको दुःखमा दुःखी भएका कुनै कविले यस्तो भनेका छन् :-

> "मनुष्यजातौ तुल्ययां दासत्वमतिगर्हितम् ।
>
> प्रथमो यो न तत्रापि स किं जीवत्सु गण्यते ? ॥"

अर्थात, आफू समानैको मनुष्य जातिमा करियाहुनु विछट्टै घिनलाग्दो कुरा हो. त्यसमध्यमा पनी जो असल हालतमा छैन, के त्यो जिउँदाका गन्तीमा गनिन्छ ?

करियामा र हामीमा भएको भेदभाव देखाउनालाई अहिले यो सवै कुरा धेरै बढाएर देखाइयो भनी ठानौला, त्यसो होइन. कतै नाबालक मालिकको काम काजमा सल्लाहकार जस्ता भई चाहिने

बरबन्दोबस्त मिलाई घरबार थामी रहने ७० वर्ष नाघेका करिया भएका घर पनी छन्. घरका मालिक नाता गोताहरू कामविशेषले वा सयललाई टाढा जानु परेमा घरको याद विचार राखी रहने करियाहरू भएका घर पनी पहाडमा नभएका होइनन्. मालिक र करियामा थोरै कुराको मात्र फरक भई एकै जहान जस्तो गरी वसेका घर पनी देखिएकै छन्, तर यस्तो सौभाग्य सबै घरमा हुँदैन करियाहरूले दासत्वको अवस्थालाई कस्तो मान्दा हुन्, एकपल्ट आफै विचार गरी हेर आखिर, करियाहरू पनी मानिसै हुन्, मानिसको जस्तो दिल तिनीहरूको पनी रहेकै हुन्छ. आफूले गरेको कमाई आफ्नो हुन्न भन्ने भयो भने मेहनत को गर्ला ? , संचिता गरुँ राखूँ भन्ने हो होला ?; हिसाबशान्ति खर्च गर्नुपर्छ भन्ने पट्टी को लाग्ला ?; ज्युँ त्यूँ एक पेटलाई पुग्दो भन्दा बढता संचिता गर्नुपर्छ भन्ने को हुनन् ?. त्यस्तै मैले कमाएको मेरो हुन्न भनी जान्ने करियाको मनले भन्दो होला वा हो ओईन.. यस्तै खराबीको विचार राखी संवत् १९७८ सालदेखि आमाबाबुका सम्पत्तिमा र आफूले कमाएकोमा पनी करियाले हक पाउने ऐन बनी कायमै रहेको छ ता पनी त्यसबाट अझ सम्म केही फायदा देखिएको छैन. किन भने, करियाको जम्बै टायम मालिकको काम गर्दामा नै वितिसक्ने हुनाले आफ्नो असल हुने काम गर्न नपाई उसको आफ्नो भन्नु खोप्राका २/४ हाँडा चिन्डा सिवाय देशमा बाँधीने साधन भएका घर खेत जमीन केही हुँदैनन्. जोडा बाँदिई त्यसलाई बालबच्चाबाला गराइएला, तर जाहान छोरा छोरीबाट सुख सन्तोष कति मिल्ने हो र ? ढिलो चाँडो मात्र हो, एक न एक बखत मालिकका मौजमा साथका जहान बच्चाको बिचल्ली हुन जानु बेर छैन भनी सम्झनैले मात्र पनी त्यसको दिलको आनन्दले आधा ठाउँ छोडिहाल्दो होला. करियाको समझ त्यहाँ सम्मको हुदैन, यस्ता कुराको विचार तिनीहरू कहिल्यै गर्ने हुँदैनन् भनौला, ती चारखुट्टे पशु होइनन् मानीसै हुन्. पशुले पनी आफ्नो बच्चा लैजान लाग्दा बच्चाको मायाले छोप्न आइलाग्दछ भने जबरजस्ती जहान बच्चा सँग अलग गराइदिएमा अर्काको दास दासी भई रहेका भए पनी ती करियालाई कस्तो भारी चोट लाग्न जाँदोहो ? त्यस्तो परिआउँदा तिनीहरूले रोई कल्पी बिलौंना गरेको तिमीहरू कसै कसैले देखे सुनेकै पनी होलाऊ. सज्जन हो ! निर्धा निमुखाको निर्धाइबाट लाभ उठाउनु सज्जनको योग्य काम होइन. स्वभावैले जीवात्मालाई जहान बच्चा संगको संयोग गराई राखिदिएकोछ. त्यो नियम विरुद्ध गरी आफै मध्यका एक थरी मानीस माथी तिनीहरू अबुझ होऊन ता पनी तिनको टिठ लाग्दो अवस्थामा खेला गर्नु बुद्धि विवेकको काम हो भन्नु होला केत ? जो होस्, करिया जुन अवस्थामा छ त्यस अवस्थामा त्यसले आफ्नो मुलुकमा प्रेम, यता उताका सबै कुरामा विचार, आफ्नो अवस्था सुधार्नामा उत्साह राख्न, अर्थात् त्यसले आफूखुसी स्वदेसी भाइ जस्तो प्रजा बनी रहन, शक्तोहो भन्नु व्यर्थ छ.

यो दासत्वको चलनले दासदासीहरूको चित्त नविगारिरहँदैन भन्ने कुरा छँदैछ, त्यो बाहेक अव यसबाट फाइदा बेफाइदा के हुँदो रहेछ भन्ने कुराको राम्ररी विचार गरी हेरौं. यो चलन एक न एक बखत सारा संसार भर चलेको थियो. धेरै ठाउँमा बलियाले निर्धालाई जिती करिया बनाउने चाल थियो. अथवा खुल्लम्खुला चोरी डकैती गरी लगेका मानीसहरू ज्यूका ज्यू व्यापारीका हातमा पर्न जाने गर्थे. थिचो मिचो वा बलका जोरले बलियाको हातमा धेरै जगा जमीन पर्न गएमा सो जगा कमाउन मानीस चाहिन्थ्यो. यिनै खेतीवालाहरूका हातमा चोरी डकैती गरी ल्याएका मानीसहरू खुला बजारमा करियाका व्यापारीहरूले बेच्ने गर्थे. यस्ता मानिस बिक्री हुने बजारहरू, आजकाल मालमत्ता चीजवस्तु भेडावाखाको वजार लागे झैं बराबर लागिरहन्थे. तिनै बजारहरूबाट खरिद गरी ल्याएका करियाहरूबाट ती खेतीवालाहरूको काम चल्थ्यो. जवरजस्ती ल्याएका मानीसबाट करकाप लगाई काम लिनुपर्ने हुनजाँदा ती करियाहरूलाई साह्रै सास्ती सासना दिई शकेसम्मको काम लिने गर्थे. यस्ता तरहले ती करियाहरूले काममा लागेका बखतमा पिठ्युँ बचाउनाको फिकिर लिई नजर पछाडी राखी रहनुपर्दथ्यो. अर्थात् काम नगरे पिठयुँमा कोर्रा बज्रला भन्ने डरले काम लाउने मानिसको मुख्यांजी कर बलले जो भयो त्यत्तिकै मात्र तिनीहरूबाट काम पाइन्थ्यो. आफूसुखीहरूको काम गराई त्यस्तो हुँदैन. काम अनुसारको कमाइ हुन्छ भन्ने दिलमा लिई काम गरी आएको आयस्ताले आफू र जाहान छोरा छोरी पाल्ने हिकमत बाँधी काम गर्ने तिनीहरू हुन्छन्. यस्ता तरहको फरक करिया र आफूसुखीको काममा हुन्छ, यसका भारी दृष्टान्तहरू दासत्वको चलन बन्द हुँदा धेरै ठाउँमा देखाएका छन्. काम गरोस् नगरोस् करियालाई खान लाउन दिनैपर्‍यो, बेमारी भएमा याद विचार राख्नै पर्‍यो फेरी मर्‍यो भाग्यो बेपत्ता भइदियो भने नोक्सानी जनाई त्यसको मोलको लगत काटिहाल्नुपर्ने हुन्छ. करियालाई काम लाउँदा तिनीहरू माथि अरु ज्यामी र खेतालाहरूमा भन्दा ज्यादा दृष्टि दिनुपर्ने हुन्छ. किन भने, काम गरे पनी नगरे पनी एक पेट पाइहाल्छु भन्ने निश्चय त्यसलाई हुनाले जति सक्यो त्यो ठग्नै खोज्ने हुन्छ. ठग गर्छ भनी कम खान दिउँ भने उसको ज्यु निर्धो हुनजाँदा उल्टो आफ्नै नोक्सान हुने हुन्छ. करियाबाट भन्दा आफूसुखीबाट धेरै असल काम हुन्छ भन्ने अनुमानै मात्र होइन, इतिहासका लेखहरूबाट पनी सावित भईरहेको छ. यी दुवै थरीलाई काम लगाई हेरेका मानिसहरूलाई पनी यो कुरा अनुभवसिद्ध भइरहेकै होला. हेर, क्याट्-रीभर किनारको वस्तीमा रहेका हाटेन्टट भन्ने मानिसको इतिहासमा दासत्व बन्द हुनु भन्दा अगाडी करिया छँदा तिनीहरूले गरेको काम र तिनै करियाले आफूसुखी भए पछि गरेको कामको फरक स्पष्ट देखिने भारी दृष्टान्त पाइन्छ. तिनिहरू करिया छँदा सम्म यहाँ सम्मका बिलकुल बेकम्मा ठानिएका थिए कि आफ्रिकाका हब्सीहरूले समेत तिनीहरूलाई

काममा नालायक अल्सी भनी गिल्ला गर्ने गर्थे. आफूसुखी भई पछि तिनै हाटेन्टटहरू पछि त्यस्तै वस्तीमा अत्यन्त मेहनती भई निस्की तिनीहरूले अघि बाली नाली केही लाग्न नशकी पर्ती पडिरहेको जगालाई समेत किसिम किसिमका उब्जनीले भरिपूर भएको मानौं बगैंचै जस्तो रमणीय गराइदिए. करियाहरूलाई मेहनत गर्ने बानी पर्नै नदिइराख्ने दासत्व नै हो. त्यसैले तिनीहरूलाई बुद्धि, विवेक र शोच विचारको प्रभाव, प्रकाश गर्न नशक्ने गराइराखेको छ.

करियाको चलन अघिदेखि चलिरहेको हुनाले यसै पनी भएकै छ, नाहकको टन्टा को गरिरहोस् भनी यस कुराको शोच विचार तिर करियाका मालिकहरूको चित्त उस्तो गएको देखिदैन. वास्तवमा आफैले अनुभव गरिहेर सवुत प्रमाणवाट सिद्ध भएको कुरामा नै तिनीहरूको पूरा दिलजमी हुनेछ. करियाहरूको र आफूसुखीहरूको काम दाँजो हेर्दा करियाहरूबाट भन्दा आफूसुखीहरूबाटै बेस काम हुने देखिन्छ. किनभने, कामकाज गर्दा मन लगाई गरेको र नगरेकोमा धेरै फरक हुन्छ. टाढाबाट दाउरा घाँस पानी ल्याउने इत्यादि काममा चाँडो ढिलो जसो गरौं भने पनी गर्ने बाटो पाइन्छ. गरुँ कि नगरुँ भने जस्तो गरी काम गर्न लागे चाँडै सिद्धिने काम पनि ढिलो हुने र मन लगाई गरे त्यही काम पनी चाँडै सिद्धिने हुन्छ. काममा मन नदिए हुत्याइदिनन्. अरु ठाउँमा पनी बिक्नशकोइनँ भन्ने डरले आफूसुखी दर्माहदार वा वनियारेहरूको काम केही न केही जाँगर साथैको हुने हुन्छ. राम्ररी काम गरे पनी नगरे पनी खान लाउन पाउन्यै भई त्यस्तो डर नहुनाले ज्यू साँच्नै पट्टी लागी शकेसम्म धेरै जसो करियाले ठग्न्यै मन गर्छन. बेचिएलास भन्ये हप्कीदप्कीलाई पनी उस्तो पर्वाह राख्तैनन् 'मलाई के छ, जहाँ गए पनी एकै न हो, भन्न सजिलो गर्न गाह्रै हुन्छ' भनी करियाले ठानेको हुन्छ. त्यसलाई बेची आर्को किन्नालाई पनी त्यस भन्दा असल कोही मात्र पाइन शकिने होला. तहलाउनालाई हप्की दप्की पीटपाट गरे झोकले त्यो बेपत्तै हुन पनी बेर लाउँदैन. यो कुरा आफूले अनुभव गरी नहेरेका भए पनी आफै जस्ता जहान बच्चा भएका छरछिमेकी इष्टमित्रहरूले करीया नराखी वनियारे दर्माहादार इत्यादिवाट चलाइराखेको घरको कामकाज, करियाहरूवाट भएको भन्दा केही न केही बढता भएको देखेकै होलाऊ; याद नराखेको भए पनी याद राखे देखिन आउनेछ.. अघि विदेशी मुलुकहरूमा करियाहरूलाई काम लाउने दर्माहादार नाइकेहरूले शकेसम्मको काम लिनाका निमित्त करियाहरूलाई साह्रै सताउँदा पनी आफूसुखीहरूबाट भन्दा करियाहरूबाट धेरै नै कम काम हुने गर्थ्यो. दासत्वको चलन बन्द हुनु भन्दा अगाडी पेम्बा टापूमा सरकारतर्फबाट यस बारेको तहकिकात गर्न खटिएका पञ्च भलाआदमीहरूले सबै राम्ररी गोर विचार सँग हेरी सबुद प्रमाणबाट देखिएको कुरा जाहेर गर्दा 'पेम्बाका हब्सी करियाहरूको र त्यस भन्दा केही पर सिचेलिस भन्ने टापूका आफूसुखी त्यस्तै हब्सीहरूको काम दाँजी

हेर्दा धेरै नै फरक देखिन आयो. खेतीपातीको काममा पनी आफूसुखी हब्सी एक जनाले गरेको काम करिया हब्सीले गरे भन्दा तीन दोबर बढ्ता हुँदो रहेछ' भन्ने रिपोट गरेथे. हाम्रो यहाँ तीन दोबर सम्म पनी नसंझी. एकजना बनियारे वा दर्माहादारले गरेको काम दुइ जना करियाबाट हुने गर्दोहो भन्ने यत्ति मात्र संझेको पक्षमा पनी काम दिने २ जना करियालाई लाग्ने खर्चबाट एक जना बनियारे वा दर्माहादारलाई राख्नाले त्यसबाट काम घटी हुने होला वा खर्च बढ्ला भन्ने शङ्का हुन आओइन. काम गर्ने करियालाई पाले झैं आफ्ना घरका काम दिन नशक्ने रोगी बुढाबुढी र बालक करियाहरूलाई पनी मालिकले पालिरहनुपर्ने र त्यस किसिमको उल्फा खर्च ज्यालादारीमा नपर्ने हुनाले त्यताबाट पनी केहीनकेही किफायतै हुनजाला. आर्को कुरा के छ भने, करिया राख्ता मरी भागी नाशी जाने खतडा र त्रास पनी रहने हुन्छ. फेरी करिया लिंदा एक मुष्ट दाम खर्चगर्नुपर्दछ ज्यालादारीको हक्मा न त त्यो खतडा छ, न एक मुष्ट दाम खर्चगर्नुपर्छ. यो कुरा करियाका मालिकहरूले पनी हो भन्नै पर्ला मरी भागी नुक्सान पर्नजानु नसीबैको कुरा हो, त्यस्तो नुक्सान परिआए सहनैपर्छ भनी कोही कोही भन्लान् त्यसरी जेसुकैमा पनी नसीबै ठोकी जे भयो नसीबैले गरे गराएको भनी युक्ति बुद्धिले सम्हालि न सक्ने कुरामा पनी नसीबैलाई अघिसार्नेहरू सँग छलफल गरेर निर्वाह हुँदैन. घरमा करियाहरू हुने मालिकलाई करियाहरू थलिएमा जत्तिको याद विचारको झंझट पर्ने हुन्छ, करिया नरहे पछि त्यत्तिको टन्टा झंझट मालिकलाई नपर्न्यै होला. करियाहरू भागी गए भरमुलुकमा जहाँ फेला परे पनी अैनले पक्री ल्याउन पाईने हुनाले पक्रियौंला भन्ने डरले करियाहरू अडिने हुँदा घरको आलमालको याद विचार तिनका भरमा छाड्न शकिन्छ भनी कसै. कसैको भनाई बुझिन्छ. करियै होस, वनियारै होस्, ज्यालादार नै होस्, वा अरु कुनै हुन्, बेइमान निस्केमा सबैमा निस्कन शक्ने र इमानदार निस्केमा पनी सबैमा निस्कन शक्ने हुनाले यो कुरा दोहरै बराबर देखिन्छ. अहिले के करियाकै भरमा सारा जगत्को आलमाल रहेको छ र ? . बेइमानी गरी मुग्लाना गएका खण्डमा सबै एकै हुन्. यहाँलाई जसले गरे पनी ऐनले पक्रिने बाटो उत्तिकै छँदैछ.

अब केही खेतीपाती तर्फका बारेमा पनी विचार गरौं आफ्नो खेतीपाती गर्नलाई जति मानिस चाहिने हुन् त्यति सबै करियै राख्नु जो हो. अघि पछि ती सबैबाट पूरा काम लिने बाटो नहुनाले उल्फतको खर्च गर्नु हो भन्ने कुरा सवैले जानेकैछन् खेतीपातीको काम चलेका बेलामा करियाका मालिकले होस् वा अरुले होस् पर्मा दर्माहादार र अरु वाहिरिया ज्यालादारी मानिसबाट समेत काम नलिई निर्वाह हुँदैन. हाम्रो यहाँ आफुसमा मदत दिने पर्माको चलन पनी चलेकै छ. यो साह्रै सजिलो र बेस चलन हो. करियाका मालिकले पनी यसै गरी काम लिनुपर्ने भएको हुनाले यो करियाको चलन हटाए पनी

उनको काममा हानि होला भन्ने देखिँदैन. करिया नपालेपनी धेरै जगा हुने धनीहरूले दर्माहादारहरूबाट र अरु बाहिरियाहरूबाट समेत काम लिई आफ्नो बन्देबस्त मिलाएकै छन् यसबाट फायदा नहुने भए उनीहरू यस रीतलाई समाती काम चलाउने किन गर्दथे ? . कोही कोही ता खेतीपातीको वेलामा मात्र होइन कि यसैबाट बाह्रै महिनाको आफ्नो सबै काम चलाउने गर्दछन्. एक दिन, अलिक दिन अथवा वर्षै दिनका कामलाई बनियारेबाट काम लिंदा बेहान दिउसो र बेलुकाको खानु दिएर काम सकिए पछि 'यति चाँवल पिठो अथवा रूपैयाँ दिने' भनी गरेको बन्दोबस्तले पाहाड तिर यति खर्च पर्न आउने रहेछ भन्ने अन्दाज गर्न हामीलाई सजिलो हुन्छ. अर्थात खुवाउनु पर्ने खर्च करियामा र वनियारेमा बराबरै पर्न आउँदछ. बनियारेलाई दिनुपर्ने चाँवल पिठो र रूपैयाँका विचारगर्दा ठाउँ ठाउँका चलनमा फरक भए ता पनी उनीहरूलाई खुवाएको भन्दा पछिवाट दिएको चाहीँ खुवाउने खर्च भन्दा धेरै नै कम पर्न आउने रहेछ, अथवा आधा जति सम्म पर्न आउँदो रहेछ भनेर भन्न पनी शकिन्छ. खर्चको हकमा यो माथी भनिएको केही कुरा थाहा भयो, अब कामका बारेमा पनी हेर, वनियारेलाई करियाका जस्तै जन्मभर खुवाउनु नपरी आफूलाई चाहिने टायम सम्म मात्र राख्न पाइने हुनाले यो चलन साह्रै बेस हो भनी अघि भनेको हुँ, वनियारेलाई सरदरमा मोरु ६। सम्म महिनाको पर्न आउने रहेछ. कसरी भने, चलेका चलन बमोजिम चाँवल वा पिठो ।७४, दिउसोको खाजा १ माना पिठो वा मकै र, कपडामा एकथान कोरा, भोटो टोपी र २/३ वर्ष खप्ने राडी वा पाखी दिई वर्षको अन्तमा मोरु १०/१२ दिन्छन्, यो पश्चिम तिरको चलन हो. एक जना करियालाई कति खर्च पर्दो रहेछ भनी ५/७ जिल्लाबाट झिकाएको अंकले महिनामा कमसेकम सरदर मोरु ४।- पर्न आउने देखियो. वनियारे एक जनालाई महिना १ के मोरु ६।- पर्न आएको हुनाले करियामा लाग्ने खर्चको शयकडा मोरु ५० बढ्ता बनियारेमा परेको देखिन्छ भनौं भने पनी कामको हिसाब गर्दा त्यसलाई नुक्सानी भन्न शकिदैन. किन भने, करियाको भन्दा दोबर बढ्ता काम वनियारेले दिन्छ भनी अघि भनिएका कुराले २ जना करिया पाल्नुपर्ने ठाउँमा अथवा करिब आठ रूपैयाँ महिना खर्च गर्नुपर्ने ठाउँमा एकजना बनियारेलाई ६ रूपैयाँमा पाल्नुपर्ने हुनाले सोझै हेरे पनी अझ तिमीहरूलाई केही बचत हुन आउने नै देखिन्छ. स्वास्नीमानीस वनियारे राखेको छ भने खान र लाउन कमारीकै जत्ति पर्ने हो ता पनी पछिबाट दिने कुरा बनियारेमा बढता पर्न जान्छ भनी कोही कोही भन्लान् तर यसमा पनी कमारीहरू धेरै नै हाँसखेल ठट्टामा समय बर्बाद गर्ने हुनाले करियाबाट पाइने काम भन्दा बनियारेबाट ३ दोबर वडता काम पाइन्छ भन्नामा संदेहै छैन.

यी सब कुरा देख्नाले दासत्वको चलन हटाए पछिलाई पनी यसै गरी बनियारेबाट घरखेतको काम लिन पाइने हुनाले दुःख होला भन्ने देखिँदैन. यतिका करियाहरूले गरेको कामलाई त्यतिका बनियारे कहाँ पाउनू भनी कोही शंका गर्ने होलान्, तर तिनीहरूले यो बुझ्नु पर्दछ कि ती अमलेख भइसकेका करियाहरू पनी पछि पछि बनियारे काम गर्ने हुनाले कसैलाई पनी बनियारेबाट हर्जा हुन शकोइन. फेरी दासत्वको लामो बन्धन तिनका टाउकाबाट हटे पछि ती अत्यन्त धेरै काम गर्न र धेरै काम दिने पनी हुन आउनेछन्.

यस ठाउँमा अर्को विचार गर्नुपर्ने कुरा यो पनी छ कि कुनै कुनै मालिकले आफ्नो जगा छुटयाई कमाएर खानू भनी करियालाई बाँडिदिने गरेकाले तिनिहरू त्यही कमाई आफूलाई पाल्दछन्. यस चलनमा र अघि भनिएका चलनमा संपत्तिशास्त्रको भनाइबाट विचार गरी हेर्दा धेरै फरक देखिँदैन किनभने, करियाहरूलाई त्यो जगा असल बनाई त्यसबाट धेरै उब्जनी बढाऊँ भन्ने विचारै रहँदैन. मालिकले आफ्नो जगा आफै कमाउँदा उब्जनी धेरै बढ्ने र जगा पनी असल हुने हुन्छ भन्ने कुरा तिमीहरूलाई संझाइरहनुपर्दैन. यी सबै कुराको राम्ररी विचार गर्दा कुनै तरहबाट हिसाव गरे पनी करियाले गरेको काम भन्दा ज्यालादारीबाटै गरेको काम किफायत, सजिलो र असल छ भन्ने नै ठहरीन आउनेछ.

यी कुरा सबै साँचा हुन् ता पनी कमारा कमारीलाई जोडी बाँधिदिए तिनीहरूबाट जन्मेका छोरा छोरीबाट पनी काम लिन पाइने हुनाले करियाबाट हुने घटी कामको सापोनापो मिलिहाल्दछ भन्ने भनाइ कसैको होला, तर यो भनाइ ठीक होइन भन्ने अघि भनिएका कुराहरूबाट स्पष्टै देखिन आएकै छ. धेरै हुनैले मात्र असल हुने होइन, राजीखुशी सँग थोरैले गरे जति काम बेराजी धेरैबाट हुनशक्तैन. यो सिवाय, छोरा छोरी तुल्याउनालाई पहिले कमारी यौटी चाहिने हुनाले त्यसलाई परेको मोल जति हो, सुरुको खर्च त्यही भइहाल्छ, त्यसले छोरो पाई भने वालकलाई काम दिन सक्ने १६ वर्षको सामर्थ्यवान् नभएसम्म पालन वर्सेनी खर्च लागिहाल्छ, यो खर्चको जम्माजम्मी यसै साथ गाभिएको फिरिस्त 'क' मा देखाइएको हिसाबले करिब ४०९ रूपैयाँ पुग्न आउँदो रहेछ. त्यसमा ठिटो कमाराले सानोतिनो हल्का काम गरिहाल्ने हुनाले त्यसलाई पाल्दा लाग्ने खर्च केही कसैरै राखेको छ. यो दाम कमाराको बच्चा पाल्नामा नलगाई सुरुमै शयकडा १० को ब्याजमा लगानी गरे त्यसको आम्दानीले ज्यालाबनीमा एक जना मानीस राख्नालाई चाहिने खर्च पुगी काम पनी करियाले गरे भन्दा दोबर लिन पाइने हुन्छ, अझ त्यसमा कमारीको मोल समेत राखी हिसाब गरे जम्मा करिव ११२३ रूपैयाँ हुँदो रहेछ. यसको हिसाब पनी त्यसै फिरिस्तमा देखाइएको छ. पहाड तिर त्यति रूपैयाँको पूँजिलाई निक्कै

नै हो भन्नुपर्छ शयकडा १६ देखि ३० सम्मको मुनाफा ब्याजको चलन राखेको छ ता पनि ऐन बमोजिम शयकडा १० मात्रको ब्याज राख्ता पनी ११।२३।१० को जम्बा वस्न आउँदोरहेछ. साँच्ची भनुँ भने, यसरि मालिकहरूले करियामा लाउने आफ्नो धन लगानी गर्न लागे भने पहाड तरफ चलिरहेको चर्को ब्याजको दर क्रमै सँग घट्दै गई दुनियाँ रैतीको व्यवहारलाई धेरै नै सुविस्ता हुनजानेछ, लगानी गर्नेहरूलाई पनी हल्का ब्याजमा दिएको सापटी हुनाले चर्को ब्याजको सापटी भन्दा सजिलै सँग असुल हुने होला. जहाँ त्यसो भयो उहाँ साउँ डुब्ने कम हुनगई फाइदै हुने हुन्छ. करिया राख्ताको नोक्सानी तिनका छोरा छोरी बेची पुर्न पाइने हुन्छ भनी कोही भन्दछन. आमा बाबु सँग छोरा छोरीलाई छुट्याई विक्री गर्ने कठोर कामलाई कस्तै निन्दा गरे पनी पुग्ने होईन. यस चलनको सबै भन्दा ननिको कुरा नै यही हो. बिराना करियाहरूको बारेमा समेत यस्तो चलन साह्रै निर्धिन हो भन्नु पर्नेमा पार अमलेख भए पछि आफै समानका हुने आफ्नै स्वदेशी भाइहरू माथीको यो चलनलाई के भन्नू ?, यस्तो घटिया मतलबले करियामा दाम हाल्दा मालिकहरूलाई फाइदा पनी छैन. यसै साथको अर्को फिरिस्तको ‘क’ ‘ख’ को कागज हेर्नू, त्यसबाट बालक कमाराहरूलाई ६ वर्ष उमेरको गराउनालाई लाग्ने खर्चको दाम राम्रो गरी लगानी गरे ज्येठो चाहींलाई लाग्ने दामबाट करिब २९४ रूपैयाँ र त्यस पछि जन्मेका बालकहरूलाई पाल्दा लाग्ने खर्चको दामबाट करिब ६२ रूपैयाँ हुनशक्दो रहेछ भन्ने देखिनेछ. यस हिसाबले यौटी कमारीबाट ६ छोरा छोरी जन्मे भने तिनीहरूलाई ६ वर्षको उमेर सम्म पाल्दा लाग्ने खर्चको रूपैयाँबाट होइशक्ने आम्दानीको हिसाबले ६ वर्षको बालकलाई जनही करिब ९८ रूपैयाँ पर्ने र ८ बालक जन्मे भने जनही ८८ रूपैयाँ जति पर्दोरहेछ भन्ने पनी त्यसै फिरिस्तमा लेखिएको हिसाबबाट थाहा हुनेछ. ६ वर्षका करियाको अैन बमोजिमको मोल ३५ रूपैया छ. अहिले् भने झैं बालक कमारो पाल्दा लाग्ने खर्च लगानी गरेको पक्षमा त्यो भन्दा धेरै बढ्ता आम्दानी हुन शक्तछ. करियाका बालकहरू बेच्ने भन्ने ‘अपवाद’ बदनाम पनी उठाइरहनु पर्दैन. चल्तीका हिसाबले बढी मोल पाइन्छ भनी भन्नेहरूले यौटा कुरा याद राख्नुपर्छ, मोल जति चर्को गरायो उति करिया जन्माउने कमारी किन्ने खर्च पनी बढाएरै हिसाब गर्नुपर्ला. त्यसो गरिहेरेका पक्षमा पनी सो मोल बापतको अंक र अरु खर्चको दाम लगानी गरेमा हुने आम्दानी बढी नै हुन आउने छ. करियाका छोरा छोरी विक्रीबाट निस्तुक आम्दानी होला बा होओइन भन्ने शंका रहेको भन्दा लगानीको आम्दानी घटी हुनेछैन. यो सिबाय, करियाबाट ६ अथवा ८ छोरा छोरी हुनन् वा होओइनन् भन्ने र कमारी बाँझी नै रहली भन्ने पनि संभव रहेकै हुन्छ, फेरी जन्मेका बालकहरू विक्रि हुने उमेर नपुग्दै धेरै जसो मर्ने पनी हुनन्, त्यस्तो परेमा कमारीका छोरा छोरीको विक्रिबाट आयस्ता

होला भन्ने कुराको आशा पुग्नु त्यत्तिकै हुनजान्छ. लगानीमा फाइदा छ भनी यौटा दृष्टान्त सम्म यहाँ देखाइएको मात्र हो, फाइदा हुने उपायहरू अरु अरु पनी छन. फलफुलको बगैचा लाउने, चौपाया वस्तुहरू पाली असल बच्चा झिक्ने, जमीनबाट असल उब्जा गराउने यस्ता अनेक हटौटीहरू छन्. यस्तै अरु अरु जुन काम गर्नाले फाइदा देख्छौ, सो गर्नाले बढतै फाइदा हुने हुन्छ. त्यस्तो फाइदामा करिया राख्ने घटिया चलनको दोष पनी रहेको हुँदैन. काम काजका निमित्त होस्. वा बेच बिखनलाई होस करिया पाल्नाले फाइदा छ भन्ने समझ लिनु भूल हो, वास्तबमा त्यसबाट फाइदा छैन.

त्यति मात्र होइन, त्यो चलन राखिरहने जातिलाई नराम्रो गराउने यौटा अधर्मको चाल पनी सो करियाको चलनमा रहेको छ. कमारीबाट जन्मेको बालकको बाबु, मालिक बाहेक आफूसुखी मानिस भएमा ऐन बमोजिमको मोल तिरी त्यो बालकलाई अमलेख गराई लिन पाउँछ भन्ने ऐन छ. आफ्नो देहबाट जन्मेका बालकलाई अमलेख गराउने मन बाबुले गर्न्यैछ भन्ने विचारले त्यो ऐन बनेको हो, तर अप्सोस छकि त्यो ऐनको मन्साय अझ सम्म पुग्न गएन, आफ्ना छोरा छोरी अमलेख गराओस भने पनी सो गर्नाको हबीगत नभएका गरीब लोग्ने खोजिदिनाले तिनबाट जन्मेको बालक करियाको करियै रही आफूले बेचबिखन गर्न पाइने हुन्छ भन्ने क्षुद्रबुद्धिले कमारीलाई त्यस्तो लोग्ने खोजी दिने पनी कोही मालिकहरू गर्दारहेछन्. मालिकबाटै जन्मेको बालक ता ऐनले सरासर त्यसै पार भइहाल्दछ, आफूसुखीबाट जन्मेका बालकहरू पनी अमलेख हुन जाऊन् भन्ने सरकारको मन्साय यस्ता तरहले पुग्न नदिई कमारीहरूलाई वेश्याको चालमा लाग्नुपर्ने गराउँदा रहेछन्. यो बहुतै सरमको कुरा हो. ऐनको मन्साय छल्नाका लागि त्याहाँ सम्मको छोटो बुद्धिमा लाग्ने मालिकका जाहानहरूमा त्यस्ता कमारीहरू कस्तो आदर्श भइ रहँदा हुन ? यस्तो भ्रष्टाचार द्वारा कमारीबाट छोरा छोरी झिकी विक्री गरे ता पनी त्यसबाट मालिकलाई साँच्चिकै फाइदा हुने पनी होईन. बेश्या पाल्नामा र यसरि पाल्नामा भेद के रह्यो ? वेश्याको चलन रहन दिनु वा बढन दिनु ठीक होईन भनी सज्जनहरू भन्दैछन् भने के यस्तो चालसँग कमारी रहन दिनु ठीक होला ?. बालक कमारा कमारीहरूलाई कलिलै उमेरमा आमा बाबुसँग विछोड गराई अन्यत्र बेचिदिन निर्घिनी चाल हो भने यसरि कमारा कमारी पैदा गराउनु झन् त्यो भन्दा बढता निर्घिन चाल होइन र ?. यस्तो हुन लागे पछि कमारीबाट धेरै छोरा छोरी होऊन् भन्नाका लागि गाईलाई साँढे लाए झैं कमारीलाई पनी जोडा फेरी फेरी दिने पनी कहिलेकाहीं मालिकहरू गर्दा हुन् भन्नामा के आश्चर्य छ ? विचार गर, जुन मुलुकमा विवाहबन्धनलाई बहुतै पवित्र मानी जारीखत हुन गएमा साधुले जारलाई हदसेहद सम्मको कडा सजाय गर्न पाउने ऐन छ भने

त्यस्तो मुलुकमा यस्तो घिन लाग्दो चलन कायम रहनु के सारै ठुलो खेद हुने कुरा होईन ?. अक्सर मालिकैहरूले कमारीलाई राखी ढाकछोपका लागी अरुलाई सुम्पिदिने पनी गर्छन. यस्तो चलनले मानिसको आचार कहाँ सम्म भ्रष्ट गराउँदोहो ? यस्ता काममा लागेका पापीहरू माथि ईश्वरको कुदृष्टि रहने नै हुनाले त्यस्ताको बढिया कहिल्यै हुँदैन.

नराम्रोमा भित्तै सम्म पुऱ्याई यो कुरा गरियो. अब आर्को तर्फमा कति सम्म देखिन्छ सो पनी विचार गरिहालौं कुनै मालिकहरू आफ्ना बाबु बाजेका नाममा बट्टा लाग्न जाला भनी बरु आफू तनाहा हुन गए पनी घरका कमारा कमारी पालिरहने हुन्छन्. पुस्तानपुस्तादेखि जहान. बच्चा बढदै आएका आफ्ना करियाहरूलाई पनी पाल्न नशके नाकै गयो भन्छन्. कामलाई चाहिँदो भन्दा बढता भएता पनी बढता जतिलाई घरबाहिर गरिदिँदा आफ्नो हुर्मतै गए जत्तिकै ठान्छन्. अझ झन् लोग्ने नभएका कमारीलाई जोडा बाँधिदिनालाई अरु अरु कमारा ल्याइदिनुपर्छ भन्ने पनी सम्झन्छन्. जगा जमीन धितो राखेर जहाँ यस्तो गर्न लाग्यो उहाँ खाने मानिस बढ्ने, खाने कुरा उब्जा हुने खेत बारी भने घट्ने भई, बढ्दो खर्च र घट्तो आम्दानीले सो धितो निखन्न शक्ने हुँदैनन्. ऋमै सँग ऋणमा डुबी घर खेत समेत हिंडाउन लाग्दछन, कमाइ गरी खा भनी आफ्नो केही जगा जमीन करियालाई बाँडिदिई बेला बखतमा मात्र तिनीहरूबाट काम लिने पनी कोही हुन्छन्. त्यस्तोमा चाहिने जति थामी बाँकी करियालाई पार गरिदिए होइजान्थ्यो. पाल्न नशकी छोडयो भन्ने पर्नगई इजतमा बट्टा लाग्न जान्छ, हुर्मत रहँदैन भन्ने फजुलको समझ लिई मुफतको बोझा उठाई कष्ट सहिरहनु अप्सौचकै कुरा हो, तर यसमा पनी यौटा कुरा के छ भने त्यहाँ सम्म परिआए ता पनी आफ्ना करियाहरूलाई अन्यत्र बेचबिखन नगरी राख्नु मालिकको ठूलो दनाइ नै हो; दोपाया चौपाया पाले झै करिया पाली तिनबाट बच्चा निकाली बेच बिखन गर्ने काम साह्रै तुच्छ सम्झी दयामायाको भावले करिया विक्री नगरी राख्ने तिनीहरूको दिल तारीफ लायकको हो नभनी रहन शकिंदैन.

करियालाई राख्ने चलनले कुनै कुनै मालिकमा रहेको विचारशक्तिको धारलाई मारी रसिलो दयालाई समेत सुख्खा गराई, मानीसमा पशुतुल्य व्यवहार गराउने गर्दो रहेछ भन्ने देखिन आउँछ. यस्तै पर्न आऊँदा मालिकहरूले आफूमाथि गरेका अत्याचारको उजुर करियाहरूबाट बराबर पर्न आउन लागिरहेकाछन. आएका उजुरहरू मध्ये २/४ उजुर ता साँच्चिकै विचार गर्न लायकका देखिनाले दृष्टान्तका निमित्त तिनको यस ठाउँमा बयान गर्न पनी अनुचित हुनेछैन.

यौटा मालिकले आफ्नी कमारीलाई पेट बोकाई त्यस्का केही दिन पछि त्यो कामविशेषले विदेश गएछ. उहाँबाट फर्केर आउँदा उसले कमारीबाट बालक जन्मी मरी पनी सक्यो भन्ने खबर सुनेछ. त्यसरि कमारीले आफ्नो मालिकबाट छोरा छोरी पाए पछि ऐनका रोहले त्यो त्यसै अमलेख हुने र त्यसले केही हक समेत पाउने हुन्थी, तर मालिकले त्यस कुराको विवेकै नगरी निदर्यी भई त्यसलाई अर्काकहां बेचिदिएछ. बेचि सके पछि पनी कहिले काहीं त्यो मालिक त्यससँग जाने पनी गर्दो रहेछ. पछिबाट त्यसकाहां जाने गर्ने पुरानो मालिकले बेइमानी गरी यो पोइल गई भन्ने कुरा गरी आर्को पोई देखाईदिंदा मालिकको बेइमानीले सान्है चित्त दुखाई यस बारेमा इन्साफ पाऊँ भनी कराऊन आएकी रहीछ. फेरी त्यस्तै आर्को उजूर पूर्व २ नम्बरबाट पनी आएको थियो. यौटा मालिककहाँ २ वर्षको काखको छोरा र ६ वर्ष की छोरी समेतका कमारा कमारी एक किसिम सँग आनन्दै मानी वसेका थिए ता पनी त्यो आनन्द धेरै दिनलाई टिक्न पाएनछ. किनभने, लोभ र लालचले गर्दा दयामाया नभएका मालिकले आफ्ना ती अनाथ करियाहरू मध्ये आमा र काखका छोरालाई एकातिर एउटाका हातमा र बाबु र छोरीलाई अर्कातिर अर्काका हातमा छुट्याई बेचिदिएछ. यो कस्तो काम ? करियालाई बेचेको भए पनी यौटै ठाउँमा बेचिदिएको भए त्यहाँ सम्म हुने थिएन. यिनीहरूलाई त छुट्टाछुट्टै गरी बेचिदिएकोले हृदयलाई साह्रै पीर पर्ने कुरा हुन आयो. यसरि जहान फोरी बेचिदिनु मानो तिनीहरूको हृदयैलाई छियाछिया पार्नु होओइन त ?. हरे ! तिनीहरूलाई छुट्टिने वेलामा कस्तो भयो होला ? विचार गर त, अझ यस भन्दा पनी क्रूर काम भई करियाका उपरमा अन्याय भएको साह्रै मनमा गडने आर्को कुरा पनी तिमीहरूलाई सुनाउँछु.

यौटा कमारीका ७ छोरा छोरी भएका रहेछन्. तिनमा १ छोरी र ४ छोरा त्यसका मालिकले अघिवाटै बेचिसकेको रहेछ. पछि फेरी मालिकले दूध पनी नछोडेकी काखकी ४ वर्षकी छोरीलाई समेत विक्री गरिदिन आँटेछ र त्यो बबुरी कमारीले मालिकको पाउ परी हात जोरी रोए कराएकोले समेत केही हुन शकेनछ आखिरमा निराश भई त्यो निक्सारी अड्डामा विन्तिपत्र चढाउन आइछ. जवरदस्ती आफूसँग छोडाई अन्यत्र बेचिएका छोरा छोरीहरूको विलौनाले त्यसलाई मुटू छेडिए जत्तिकै दुःख भइराखेको थियो. "पुनस्को कमाइ र आफ्नो धर्म यस्तै रहेछ भनी धैर्य गरी आफूसँग रहेका बालकहरूको मुख हेरी चित्त बुझाइ रहेकी थिएँ अहिले दूध खाँदै रहेको काखको ४ वर्षको बालकलाई पनी कत्ती दया नराखी मालिकले विक्री गरिदिन लाग्दा चित्त थाम्न शकिनँ" भन्ने बेहोराको त्यसको बिंतिपत्र रहेछ. यमदूतले पक्री लैजान लागेको प्यारो बालकलाई छोडाउनाका लागी आमा बाबुले ईश्वर सँग प्रार्थना गरे झैं आफ्नो हर्ता कर्ता विधातास्वरूप भएका क्रूर काल जस्ता मालिक सँग रोई कराई पाउ परिछ,

केही गर्दा पनी ढुंगा जस्तो कठोर त्यसका खसमको छाति पग्लन नशकी विक्री खतम भइहालेछ. विवेकहीन पशुलाई पनी झोक उठ्ने किसीमको मालिकको चालले विक्षिप्त जस्ती हुन गई "राजा सवैका साजा बाबु जस्ता हुन्" भनी आफ्नो मनको दुःख पोख्न आएकी रहिछ. साधारण किसिमको अरु उजुर जस्तो त्यसको उजुर थिएन. खरीद विक्री गर्नेहरूलाई लिन पठाई तहकिकात गरी हेर्दा त्यसले भनेको कुरा र गरेको उजुर सबै साँचो देखियो. त्यो सानो बालक परंभट्टा गरी बेचबिखन भइसकेको रहेछ. "कमारी भएता पनी यस्ती बबुरी अवला माथि के तिमीलाई दया लागेन ? आफ्नो काखको वालक जवरजस्ति छुट्याइदिए अथवा अन्त लगी बेचिदिए तिमीलाई र बालकका आमालाई कस्तो लाग्दो हो ? यस्तो निर्दयी काम गरेकोमा सृष्टिकर्ता परमेश्वरका मुख्यांजी तिमीहरू के जवाव देऔला ?" भनी तिन सँग सोधियो. त्यसको जवाबमा पहाडमा यस्तै चलन छ, ऐनले गर्न नहुने पनी यो होईन भनी त्यो बेच्ने मालिक र किन्ने मानिसले विन्ति गरे. लौ हेर, यस्ता कुराको अर्थ के लाग्ने भयो ? यो चाल जहाँ सम्म रहिरहला त्यसको दोषभागी हामी सबै हुनेछौं. त्यस्तो चाल त्यस्तो ऐन थामिराख्नाले दुःखी आमा बाबु छोरा छोरीहरूका चित्तले दिएको शरापको केही अंश हामीले पनी नब्यहोरी सुख पाइनेछैन. बिक्री भएका करियाका हकवालाले ऐन बमोजिमको मोल तिरे अमलेख हुन पाइने ऐन बमोजिम यी बेचिएका करियाहरूका ज्यूमा परेका रूपैयाँ तिरी ती दुःखियाहरूको हाड चोखो गरिदिने काम भयो.

यी मामिलाका कुराहरू चित्तमा साह्रै गैह्रो छापा लाग्ने किसिमका हुन्. यसबाट पहाड तिर त्यसरी मानिस खरीद बिक्री हुँदो रहेनछ भन्न भएन. एकपल्ट दाम हाली करिया किने पछि पुस्तानपुस्ता बिते पनी तिनका सन्तान सबै करियै रहिरहन्छन्. तिनका ज्यू वा अरु अवस्थाको विचार नराखी जाहान बच्चा संग बिछोड गराई केही चीज वस्तु झैं गरी जता धेरै मोल पाइयो उतै विक्री गरी दिन पाउने हक मालिकको रहिरहेको हुन्छ. यो कस्तो अन्याय हो नभन्ने को होला ?. यसलाई साँच्चिकै ठुलो अनर्थ होईन भनी कसले भन्ला ?. करियाहरूका उपरमा हुने अन्यायको यथार्थ स्वरूप बाँधाहरूका कुराको विचार गर्दा स्पष्ट हुन आउँछ. करियाहरूको जस्तै गरी पहिले एक थैली रूपैयाँ दिएर ल्याएका बाँधाले मालिकको रूपैयाँ तिर्न नशके सम्म तिनको काम गरिरहनुपर्छ, अथवा काम गरेका महिनाको मासिककट्टा हुँदै जान्छ. केही गरी रूपैयाँ चुक्ता गर्न नशकी बाँधा मऱ्यो वा भाग्यो भने त्यसका सन्तानलाई बाँधा तुल्याई राख्न पाइँदैन. यौटाका ज्यूमा परेको थैलीबाट उसका पुस्तन सम्मका सबै छोरा नातिपनातिहरू करियारूपी लामो जंजीरमा बाँधिनुपर्ने यो कस्तो व्यवहार हो ?. जहिले सम्म पशुहरूमा झैं आफै समानको जीव माथि पनी हाम्रो हक छ भनी मानिसले भन्न

पाउने ठाउँ दिइराख्ने छौं, त्यहाँ सम्म यी कुचाल र कष्टहरू छट्न शक्ने छैनन्. यसबाट सदाचारको नाश र संपत्तिको नुक्सानी मात्र हुने होइन कि तरह बितरहको बिगार पनी हुन जानेछ.

आफूसुखीको जस्तो मन करियाको हुन नपाउने हुनाले तिनीहरूको आफ्नो मुलुकमा र घरबारमा समेत बलियो प्रेम वस्न नशक्ने कुरा अघि नै भनियो. जोई पोईमा र आमा बाबु छोरा छोरीमा रहने स्वाभाविक प्रेमको गाठो बलियो भएन भने तिनीहरूको जिन्दगीको सार केही पनी रहेको हुन्न. आफूलाई जहान बच्चा सँग छुट्याई बिचल्ली पारी नदिऊन् भन्ने बाहेक अरु ठूला मन्सुवा तिनीहरूलाई रहेको हुँदैन भन्ने कुराको र अरु कुराको समेत विस्तार पछि गरुंला. करियाको मन त्यस्तो हिसाबको हुनाले के हुनजान्छ भने सानो तिनो कुरैमा पनी मालिक सँग चित्त बुझेन. अथवा केही कठिन परिआयो, वा मालिकले केही सताइदिए, अथवा कुल्ली काममा भर्तिगर्न मानिस खोजी हिंड्ने धुर्तहरूले यी करियाहरूलाई सजिलै उपायले मालिक सँग चिढाई लैजान शकिने देखी केही लोभ लालच देखाइदिए भने आफ्नो जन्मभूमि त्याग्न पनी यिनीहरू गाह्रो मान्दैनन्. त्यसरी करियाहरू आफू जान लाग्दा आफ्ना हेमखेमका अरुलाई पनी तानी लैजाने गर्छन्. २/४ एका ठाउँ, २/४ अर्को ठाउँबाट गर्दा मुलुकबाट बाहिर जाने मानिसको जम्बा निक्कै पुग्न जान्छ. जहाँ यौटा करिया बेचियो, उहाँ अरु करियाका मनमा हामी पनी बेचिन्छौं कि भन्ने त्रास पसी मालिकको भर पत्यार मान्न छोड्ने हुन्छन्. बेचिएको करिया शके बेपत्ता भइहाल्ला नभए पनी अघिको घरवारको प्रेम छुटाई त्यहांको सम्बन्धै टुटाई नयां ठाउँ, नयां मालिक कहाँ पठाए पछि त्यसले सबै कुरा अनौठै देख्न लाग्दछ. यस्तो चलनले हुने विगार सस्पष्टै छ. हिन्दुस्थानमा यति उति कमाउनेछौ भन्ने लोभ लालच देखाईकुल्ली काममा भर्ति गर्न लैजानेहरूका जालमा यसरि बिछोड गराइएका विचारा सीधा सुधा करियाहरू सहजै पर्न जान्छन्. यस्ता यी भर्तिवालाहरूको बहुतै होसियारी राख्नुपर्छ. यिनीहरू कमिसन खानाका लागी आफ्ना स्वदेशी भाइ पनी नभनी बहकाई विराना देशमा लगी दुःख कष्टमा पार्न संकोच मान्दैनन्. बुद्धि भएका आफूसुखी मानीसहरू ता त्यस्तो साखै मित्र जस्तो भई बाटो देखाउन आउने मानीस कस्तो हो को हो भनी सोधी बुझी हेर्ने हुनन्. त्यसो गर्दा आफूलाई झुक्याई लैजान खोज्ने मानिस यस्तो रहेछ भन्ने थाहा पाई बेलैमा उम्कन पाउने हुन्छन्. करियालाई त्यसरी सोधी बुझी रहने औसर मिल्दैन. सोध बुझ पछि लाग्दा भाग्न आँटेको चाल मालिकले पाउनन्, उति नभए पनी शंका पर्न जाला भन्ने डरले आफ्नै बुझमा चल्नु परी मतलबीका जालमा पहिले फस्न जाने तिनीहरूनै हुन्छन्. हामीलाई चैतन्य भएको जीव हो भन्ने मात्र सँझिदिए पुग्छ भन्ने करियालाई त्यति सानो मन्सुवा पनी पुग्न नशक्ता तिनीहरू विरक्त भई मुलुक छाडी जाने हुँदा रहेछन्. एक पल्ट गएपछि

गएको गएै हुन्छ, अथवा धेरै वर्ष आउनेछैन भन्ने यस्तो विचार गरेर तिनीहरू जाने हुन्छन्. आफुसुखी मानीसलाई त्यस्तो हुँदैन. तिनीहरू गएमा फर्की आउनाको आशा लिई गएका हुन्छन्. कदाचित गएको ठाउँमा केही आपत् पर्न गई कर बलैले रोकिए भने मात्र आउन शकोइनन्, नत्र त घरको बाटो लिन पाइहाल्दछन्.

भागी मुग्लान पस्ने करियाको दशाका कुरालाई भर्तिवालाले बाँधिदिएको धोखाको पट्टी सेवानामा पुग्ने वित्तिकै खुल्नगई त्यसले त्यो भर्तिवालालाई राम्रो गरी देख्न र चिन्ह थाल्दछ. हाम्रा मुलुकका लडाका जातलाई, अंग्रेजी फौजमा भर्ति गराउने लालच देखाई ल्याएको आशा पनी त्यत्तिकै रहन गई त्यहीं बिलाउँदछ. शके त्यो कोइलाखानी चियाबारी जस्ता कार्खानाहरूको कुल्ली काममा तानी लैजानालाई मानीस खोजी हिंड्ने मानो ग्राहै हुन् भने जस्ता भर्तिवालाहरूको हातमा समर्पण होइहाल्ला. कमारो भए, कोइला खानीका सुरंगमा डल्लिनु परी जहाजी कैदी झै भुक्तमानमा पर्नजाला. कमारी लगेको भए दुवै सरकारका अैनले आफ्नो बदमासी नपक्रिने गर्नालाई तिनीहरूलाई वेपत्ता गराइदिन्छन्. यस्ता तिनीहरू कुनै दिन पाइए भने पनी भर्तिवालाको कुकर्मले बेबारिसी भई अलपत्र परी गल्ली गल्ली घुम्न लागेकी अथवा अस्पतालमा पडिरहेकी फेलापर्ली विचारा करियाहरू कन्हाइको तेलमा परेको माछो परेको माछो उम्कन खोजी उफ्रँदा आगोमा परेर भुटिए झैं यौटा आपत्बाट बच्न खोज्दा झन् भारी आर्को आपत्मा पर्नगई घरमा मालिकको पीर छल्न खोज्दा झन् कडा शासनामा पर्दा रहेछन् भन्ने देखिन्छ.

आसामको कोइलाखानीको कुल्लीकाममा लगाइराखेका नेपालीहरू सार्है दुःखमा छन भन्ने सुनियो. सरकारबाट मानीस पठाई बुझी हेर्दा छोड्न् भने पनी छोडी जान नशक्ने तुल्याई कमारो सरी गराइराखेका तिनीहरूको भयानक दुर्दशाको वृत्तान्त सवै साँचो देखिन आयो र मित्र वृटिश सरकारको मदत लिई तिनीहरूलाई त्यो बन्धनबाट छुटाई आफ्ना मुलुकमा फर्की आउन खर्च बर्चको समेत बरबन्दोबस्त गरिदिने काम भयो. त्यसमा कोही ता तुरन्त खुशी साथ फर्की आए. कोही "यौ मौका छोपी जान हामी शक्तैनौं, माफ रहोस्, जान नपरोस्" भन्ने भए. यस्तो आश्चर्य र अप्सोसको कुरा गरेको कारण के रहेछ भनी बुझ्दा तिनीहरू करिया रहेछन्, फर्की आइ मालिकका रीसको झोकमा पर्नु चाहीं बरु बिरानै देशमा जेनकेन गरी कालक्षेपण गर्न पाऊँ भन्ने रहेछन् भन्ने बुझियो. ती करियाले र ती भन्दा अघि भागी गएका अरु करियाहरूले पनी "विदेशमा ३ वर्ष वसी आएका करियाले मालिकलाई ऐनबमोजिमको मोल तिरे अमलेख हुन पाउँछ, १० वर्ष विताई आएको छ भने केही नतिरी त्यसै पनी अमलेख हुनजान्छ" भन्ने बेहोराको १९७८ सालमा बनेको ऐन थाहा

नपाई जन्मभर आफ्नो मुलुक र बन्धुवर्ग सँगबाट निकाला भइराखे जस्तो आफूलाई सम्झी बरु त्यहीं मुग्लानैमा वस्न पसन्द गर्दारहेछन्.

जुनसुकै कारणले होस्. आफ्ना मुलुकका मानिस वाहिर वसाइँ जानु जो हो सरकारबाट फिक्री लिनुपर्ने र दृष्टि दिनैपर्ने कुरा हुन्छ. ज्यादा वसाइँ जाने यौटा बाटो यही करियाको चलन हो. धेरै कमाइ हुने रोजगार मिल्छ कि भनी केही समयलाई घर छोडी आफूसुखीहरूको जानु भन्दा करियाहरूको जानु ज्यादै नै घटिया हुन्छ. आफूसुखीहरू त्यसरी आफ्नो भाग्यको खोजीमा हिंड्ने सवै मुलुकमा हुन्छन्, तर तिनीहरू घर फर्की आउने हुन्छन्. सो आउँदा या त धन, या नयाँ हटौटी, या नयाँ हिक्मतका काम, या नयाँ इलम हासील गरी ल्याई आफ्नो मुलुकको बढीबढाउ गर्ने हुन जान्छन्. करियाको चलन जहाँसम्म रहला उहाँसम्म छुट्न नशक्ने दुःख पीरबाट उम्कनका लागी तिनीहरू गएका हुन्छन्. आफू अमलेख हुन शके पनी जसका निंती फर्की आइने हो तिनीहरू नीच दास दासीको अबस्थामा रहिरहेकै हुन्छन् भन्ने जाने बुझेको र ती सबैलाई अमलेख गराउन खोज्नालाई पनी परदेशमा बसी आफूले खाईलाई बचेको पूँजीले नपुग्ने हुँदा अमलेख हुन पाउने भनी अघि भनेको अैनबाट फाइदा उठाउनु पट्टी तिनीहरूको मन गएको देखिदैन. पछि साह्रै असजिलो पर्न नजाओस् भन्ने इच्छा छ भने यसमा केहीनकेही बन्दोबस्त हुनुपर्ने भएको छ भनी सबैको राय मिल्न्यै कुरा हो. १८७२ सालमा मलाउँको किल्ला हाम्रा कब्जाबाट छुटे पछि अमरसिङ् थापाका साथमा रहेका फौजका जवानहरूबाट अंग्रेजले पहिला गोरखा पल्टन जमाए देखि यसो, अंग्रेजी फौजमा नोकरी गर्नालाई वृटिश गोरखा पल्टनका गल्लावालाहरूले यस मुलुकका मानीस हिन्दुस्थानमा लैजाने गरेकाछन्. तिनै गल्लावालाको भान पारी करिया वा आफूसुखी जो होस्, आफ्ना स्वदेशी भाईहरूलाई लगी कुल्ली काममा भर्ति गर्न मानीस खोजी हिंड्नेहरूका पंजामा पारिदिन संकोच नमान्ने, मुलुकका बैरी जस्ता दुष्टहरूको सबैले होसियारी राख्नुपर्छ. तिनीहरूले फसाई लगेका मानीसहरूले पाएका दुःख कष्टको बयान जताततै सुनिएको हुनाले त्यस्तो भुक्तमानमा पर्नजानु भन्दा बरु घरै बसी खुबसँग जोतिई कमाइ गरी पाएको रुखासुखा नै कता हो कता धेरै बढिया हुन्छ भन्ने संझी, आफ्ना स्वदेशी भाइहरूमा प्रेम भएका र मुलुकको हित होस् भन्ने मन गरेका सबैले यस्ता कुराको जनाउ घर घरै दिदै रही, हाम्रा पहाडका सीधा सुधा मानीसहरूलाई भरशक त्यस्तो आपत्मा पर्न नदिने चेष्टा गर्नुपर्छ. फसाई लगिएकाहरू मध्ये जो आफूसुखी छन् तिनीहरू ता मौका पाउनासाथ फुत्की दौडी घर फर्की आउँदा हाड र छाला मात्र बाँकी रहेको दुब्लो शरीरले हिन्दुस्थानमा

पाएको भुक्तमानको सबैलाई राम्ररी जनाउ दिने हुन्छन्, तर बिचारा करियाहरू जति छन आउन नशकी उतै रहेका रह्यै हुन जान्छन्.

कमारा कमारीहरू भागी विदेश लागिदिनाले मालिकलाई नोक्सानीको नोक्सानी र कठिनको कठिन पर्न जाने गर्छ. करियामा परेको दाम वा त्यसको मोल गुम्न जानाले नोक्सानी र तिनीहरूलाई सौंपिराखेको काम अलपत्र पारी जानाले कठिन पर्ने त्यसै होईहाल्ने भयो. यो चलन पहाड बाहेक अन्यत्र नहुनु पनी भाग्यै हो. यसो नहुँदो हो त करिया भागी नाशी जाँदा मालिकलाई हुने आपत्ति जतातत‍ै हुने थियो. करिया मरे भागेमा मालिकका घरको र खेतीपातीको काममा अपठ्यारो बराबर पर्ने भइराखेकोछ तापनी पहाडमा चलन भइराखेका कमारा कमारी भएनन् भने साह्रै कठिन पर्नेछ भन्ने तर्कना गर्छन्, यो कसो हो ? खुब गौर बिचार गरी हेर्नुपर्दछ; यदि यो कुरा साँचो भए, एक थरीको सव्य हुने काममा लाग्दा थोरै भए पनी अर्का थरीलाई संकष्टमा पार्ने दोष सरकारलाई लाग्ने हुन्छ. तर वास्तवमा सो कुरा ठीक देखिदैन किनभने, ठीक हिसाब सँग मालिकहरू र तिनका करियाहरूका नामासीको फिरिस्त अहिले खडा भईसकेकोछ. त्यसबाट मालिकहरू १५७१९ जना र करियाहरू ५१५१९ रहेछन् भन्ने देखिन आउँछ. भर मुलुकका वासिन्दा जम्बा ५५७३७८८ हुनाले त्यस मध्यें ५५०६५५० अर्थात् शयकडा ९९ न करिया, नत करियाका मालिक भएका देखिए. एक शयमा ९९ जनाको रोजिन्दाको काम विना करियाले चलिरहेकै छ भने अन्दाजी शयकडा चार आना भन्दा केही बढता ठहर्न आएका करियाका मालिकहरूले कमारा कमारी भएनन् भने कठिन पर्छ, काम टक्कै अडिने हुन्छ भन्ने सम्झनु गजबै हो. दासत्वको चलन हराउनासाथ दास दासी भइरहेका मानीसै वेपत्ता हुनन् भन्ने डर मालिकहरूको हो कि ?, यस्तो फजुल कुराले हँस्सी मात्र गराउँछ. हो, अरु देशबाट जवरजस्ती सँग पक्री ल्याई करिया तुल्याई राख्ने, वेष्टइंडिज , मारिशस र अफ्रिका द्वीपका टापूहरूमा रहेका मालिकहरूले भए त्यस्तो शंका मान्नु मुनासिब पर्थ्यो. अझ त्यहीं पनी अमलेख भएका करियाहरू आफ्नो घर नफर्की ज्यालादारी काम दिई बसेका देखिन्छन् भने, हाम्रो यहाँ अहिले भएका करिया हामी मध्यकै मानिस हुनाले तिनीहरू दास दासी भइरहेनन् भन्दैमा काम नाशिन्छ भन्ने डर मान्नु किन ?. अरु मुलुकमा गई धेरै जगा जमीन लिई खेतीपातीमा लागेका यूरोपका कोठीवालाहरू र करियाका मालिक भई रहेका अरबीहरूलाई हुँदोहो त तिनीहरूले धेरै विदेशी करिया ल्याई राख्ने हुनाले जम्बाका जम्बै करिया सबै उठी जानन् कि भन्ने डर लिनुपर्ने कारण थियो. एकलाख भन्दा पनी कम आफूसुखी मानीस भएको जंजीवारमा अन्दाजी दुइ लाख करियाहरू थिए. वेष्टइंडिजमा करियाको संख्या सात लाख जति पुगेको थियो, ती करियाहरू आफ्ना कृस्तान मालिकहरूको

आचरणदेखि कत्ति पनी राजी खुशी थिएनन्. यसरि त्यतिकसा करियाहरूले धेरै जगा आवाद गरिराखेकोमा तिनीहरूले एकदम छाडी गए अर्को सट्टाराख्न नशकिने हुनाले तिनका मालिकहरूलाई त्यस कुराको डर त्रास रहनैपर्ने थियो ता पनी आखीरमा तिनीहरूले समेत अमलेखै गराई काम चलाए भने, हाम्रा करिया जो जति छन् ती सबै यहीं जन्मेका कुलकुटुम्ब पनी यहीं भएका र आफ्नो मुलुकमा रही घर खेतीको काम लगाइएका हुनाले त्यस्तो डर त्रासको ठाउँ नै देखिदैन.

करियाहरू अमलेख हुन जानाले साधारण कामहरू ता केही बाधा नपरी चलिहाल्लान, विशेष कुनै कुनै काममा भने साह्रै अपठयारो पर्न जाने हुन्छ; अर्थात् घर गृहस्थीमा करियाले गर्ने काम एकदम अड्कने, विवाह व्रतबन्धहरूमा अहिले कलश करियाले बोकिआएका र डोली बोक्ने काम पनी तिनैले गर्ने गरेका हुनाले ती अमलेख भए पछि आफ्नो अघिको अवस्था सम्झाउने काम अर्थात् करियाले गर्ने किसिमका कामहरू नगर्ने हुनजाने हन्छन् कि भन्ने कसै कसैको भनाइ होला. अरु मुलुकका करियाका मालिकहरूले पनी यस्तै किसिमका तर्कना गरी अघि बाधा देखाएका थिए तर आखिर दासत्वको चलन बन्द भए पछि ती बाधा तर्कनाका कुराहरू वास्तवमा केही ठहर्न आएनन्. यस्तो तर्कनाको कुरा झट्ट हेर्दा हो कि भने झैं पर्दछ, तर साँच्चिकै व्यवहारमा राम्रो गरी ठहर्न नशक्ने हुन्छ. अमलेख भएका करियाले कामै गरी जीविका गर्नुपर्छ; ज्याला मजुरी पाए पछि गर्छौं गर्दैनौं भनी रहोइनन्. वास्तवमा ज्याला मजुरीले निर्वाह गर्नुपर्नेहरूले जीविका चलाउने कमाइको काम पाए पछि गर्दैनौं भन्नै शक्तैनन्. भिन्न भिन्न जात वर्णलाई भिन्न भिन्न वृत्ति तोकिएकोमा अघि कुनै बखत बहुतै कडाइ थियो, समयले गर्दा त्यसमा धेरै फरक भईसकेको छ. घर गृहस्थीमा निर्वाह चुलाउनु परेकोले त्यस्तो हेरफेर हुन गएको हो. जुन जानलाई जुन वृत्ति तोकिएको छ, त्यो छाडी अर्को वृत्तिमा लाग्ने वित्तिकै अघिको बेलामा झट्ट सबैको दृष्टि परिहाल्दथ्यो. अब र वृत्तिमा यत्तिको फरक फैलिसकेको छ कि त्यसको विशेष चर्चा हुन छोडीसकेको छ. हिन्दुस्थान तिर धेरै ठाउँमा ब्राह्मणहरू आफ्नै हातले बराबर खेती गर्दछन् तीर्थ जाँदा तिमीहरू धेरै जनाले बद्रीनाथको धाम पनी गरेका होलाऊ. हाम्रै जस्ता पहाडमा बस्ने कुमाउ गढवालका उपल्लो जातका तागाधारीहरूले भरिया भई भारी बोक्ने र डोले भई डोली बोक्ने गरेको देखिहालेकै होलाऊ. आपत्कालमा त्यसो गरेकोमा दोष छैन भन्ने धर्मशास्त्रको वचन छ. यो कलियुगलाई सधैं आपत् कालै हो भने पनी हुन्छ. इमान नडगाई धर्म सम्झी गरेको काम योग्यै सम्झिलिनाले मानहानि र आचारभ्रष्ट हुने हुन जाँदैन. जीवनवृत्तिका लागी केही इलम रोजगार कसैले गऱ्यो भन्दैमा त्यसले फसादमा पर्न नपरोस् त्यसमा कोजानि कोही जिद्दीवाल जातवर्गी निस्की गडबड मचाउला भन्नाका खातिर त्यस्ताले मनपरी गर्न नपाउने ऐन पनी बनेकै छ. इलम भनेको

जात जातको हुँदैन, इमान नडगाई धर्म थामी जसले जे इलम रोजगार गरे पनी गर्न हुँदैन भनी अर्काका जीविकाको बाटो रोकिदीन हुँदैन, यो जातले यस्तो रोजगार गऱ्यो भनी पानी काढ्न हुँदैन, भन्ने ऐनहरू बनेका हुनाले बाधा पार्नेहरूले मनपरी अरूलाई सताउन नपाउने तिनै ऐनबाट भइराखेकै छ पाहाडमा ज्यापू कसाहीहरू पाइँदैनन्. तर कुनै ठाउँमा बराम् भोटे, कुनै ठाउँमा परिघर्तीहरू र अरु यस्ता धेरै जातहरू छँदैछन्. काम अड्कला भन्ने तर्कनाको हकमा, यो कुराको विचारलाई सेन्सस फारामबाट कुनै कुनै जिल्लाको तेरीज झिकी हेरियो. त्यसबाट झन्डै सबै ठाउँमा ज्याला मजुरीमा काम लाउन पाइने आफूसुखी मानीसहरू प्रशस्त भएको देखिन आउँछ.

हाम्रो यहाँ चलेको जस्तो कमारा कमारीको चलन कुनै बखतमा हिन्दुस्थानमा, मलया प्रायद्वीपमा र पेऱ्याक् इत्यादि अरु अरु ठाउँमा पनी थियो. त्यहाँ यो चलन बन्द हुँदा कुनै फसाद अप्ठयारो परेको कुरा इतिहासमा लेखिएको र सुनिएको पनी छैन. पूर्व पश्चिम हाम्रो साँध जोरिएका पहाडहरूमा पनी अघि ठीक हाम्रै जस्तो करिया राख्ने चलन थियो. त्यो चलन लोप भएदेखी ती ठाउँका मानीसहरूलाई सुविस्तै भएको देखिन्छ. तसर्थ हाम्रै जस्तो मुलुकको अवस्थाको विचार र सामान्य विचारको हिसाबले पनी दासत्वको चलन लोप हुनजानाले करियाका मालिकहरूले अनुमान तर्कना गरे झैं अपठ्यारो र कठिन पर्नजाला भने जस्तो देखिन आउँदैन. यदि यो चलन बढिया हुँदोहो त त्यसलाई उडाउनाका निमित्त भए गरेका उद्योग सबै निष्फल भई यस बखत सबै ठाउँमा रहिरहनुपर्दथ्यो. धेरै मुलुकले यो चलन खारिज गरिसकेका छन्. तिनिहरूले अबुझ भई त्यसो गरेका हुन भन्नु ता आफै मूर्ख बन्नु जस्तो हुन्छ. दुनियाँ भर सबै ठाउँमा सुफल भइराखेकै काम हामीले गरी नहुने भन्ने शंका लिनु ता आफूले आफैंलाई हामी छोटा हौं भनी सही थपि जस्तो हुन जाने छ. बाहिरका कसैले आफूलाई त्यसरि होच्याई केही भने तिमीलाई कत्तिको झोक चल्ला ?. जङ्गलीहरूको वस्ति भएको ओविसिनिया जस्तो सानो मुलुकले पनी करियाको चलन नमान्ने ऐन हालै बनाइसकेको छ भने त्यस्तो मुलुक लगायत सारा दुनियाँले तुच्छ गरेको देख्तादेख्तै सुन्दासुन्दै पनी यो चलन हामीले राखिरहनु उचित हो भन्न के शकिएला ?. आफैमध्यका एकथरी मानिसलाई सदासर्वदा अनर्थामा पारी राखिछोड्नु त साऱ्है अन्याय हो भनी के तिम्रो अन्त:करणले भन्दो हो ओईन ?

अब मालिकहरू कति किसिमका हुँदा रहेछन् भनी केही गैह्रौ विचार गरी मोटामोटी तवर सँग छुट्याई हेर्दा तीन थरीका देखिन्छन्:

१. एक थरी घरको इज्जत आबरु जाला भनी नोक्सानी सहीकन पनी बाबु बराज्यूका पालादेखिका करियालाई पालिराख्ने हुँदारहेछन्. मानीस बेची धन लिनु धिक्कार हो; रूप, ज्ञान, सुख र दुःखको बोध जस्तो हामीलाई छ उस्तै भएका ती पनी ईश्वरले रचना गरेका हामी जस्तै मानीस हुन्. खाली अभागले गर्दा सदासर्वदाको करिया भई रहनुपर्ने योनिका पर्न गएका मात्र हुन् भन्ने दयामायाको ख्याल आफ्ना करियाहरूलाई छोराछोरी जत्तिकै सम्झी राख्ने हुन्छन्. तिनिहरूको विवाह गरिदिने, छोरा छोरी र बुढाबुढी बाबु आमाहरूको याद विचार गर्नालाई बराबर सहायता पनी दिने गर्छन्. हेर. यस्ता मालिकहरूका मनमा यो दासत्वको चलन मूलैदेखि नै घटिया हो भन्ने पार्नालाई कत्ति पनी बेर लाग्दैन. यस्तो बढिया मन्सायका काममा आफ्ना करियाहरूलाई पार गरिदिने पहिले यिनीहरू नै अगाडि सर्ने हुनेछन. करियाहरूको मोहबत यस्तै मालिकमा वसेको हुन्छ. त्यसो हुनाले करियालाई पार गरिदिंदा अपठ्यारो पर्नजाला कि भन्ने डर तिनीहरूलाई केही हुँदैन. अहिल्यै पनी कहीं कहीं नामैसम्मका मात्र करिया भइराखेकाहरू छन् भने त्यस्ता करियालाई आफूसुखी नगरिदिनु किन ?. यस्ता धेरै जना खसमहरू अग्रसर भई आफुले गरी देखाई अरुलाई दृष्टान्त जस्तो भइदिई यस्तो काममा चाहिने हारगुहारको बाटो लगाइदिनेछन् भन्ने ठुलो आशा सरकारलाई छ. सरकारले तिनीहरूको बहुतै भर मानेका र त्यसमा निराश हुनुपर्ने छैन भन्ने आशा पनी राखिरहेका छन्.

२. कामै लिनाको मतलबले मात्र करिया पाल्ने दोस्रा थरी मालिक हुन्छन्. करियाहरू अमलेख हुनगए भने पछिलाई के कसो हुनेहो भन्ने डर तिनीहरूलाई होला. सके ती मालिकहरू घरको र खेतीपातीको काम सबै करियाको भरमा छोडी आफू अलग्गै बसेका हुनन्, तर तिनीहरूले पनी आफूसुखीबाटै काम लिने गर्नाले फाइदा छ. काम गर्नेहरू पाइयोइनन् भन्ने शंका बलियो देखिदैन, किन भने, काम नगर्ने गर्दा तिनलाई जीविका चलाउनै कठिन पर्ने हुन जान्छ भनी सम्झाउने कोशीश अघि नै गरिसकिएको छ. यी मालिकहरूले मानेका शंकाको पूरा तवर सँग विचार राखिदिनुपर्छ भन्ने राय पनी सरकारको छ. यसो काम काज नअड्की चल्ने, उसो करियाहरूको गति पनी सुध्रन जाने कुनै बेस तवरको सल्लाह तिनीहरू बाट पाए खुसी साथ त्यस कुराको पनी सरकारबाट विचार रहनेछ. यो दासत्वको चलन लोप गराउनामा यी मालिकहरू अग्रसर भई सरकारलाई हारगुहार गरिदिनन् भन्ने आशा जो छ, के त्यो नपुग्ने होला त ?. तिनीहरूको सम्मति जता ढल्की तय हुने कुरा रहेको छ भने के करियाहरूको

बर्खिलाफ सम्मति दिने निष्ठुर छाती तिनीहरूको होला त ?. किमार्थ हुनेछैन भन्ने आशा. भरोसा हामीलाई छ.

३. मालिकहरूमा बाँकी अब अर्को एकथरी रह्यो. पोई सँग जोईलाई र छोराछोरी सँग आमाबाबुलाई छुट्याइदिन पनी संकोच नमान्ने, ऐन छल्नाका लागि अधम चालमा लाग्न रत्तिभर गाऱ्हो नठान्ने, ईश्वरले पनी सहिनशक्ने, आमाबाबु छोराछोरीको कठोर आँशुले व्याप्त भइराखेको काम गरी धन कमाउने आशाले करिया पाली बेचबिखन गरी हिंड्ने किसिमका मालिक यी हुन. यो चलनमा सबै भन्दा घिनलाग्दो र सुन्दै पनी साह्रै मन फाट्ने कुरा नै यहीं छ. सभ्यत पाएका सारा संसारले यो चलनलाई कत्तिको ननिको मान्ने हुँदारहेछन् भन्ने यो कुरा त परै रहोस्, त्यस्तो चलन राखिरहनेहरू सँग मित्रताको व्यवहार गर्न पनी तिनीहरू गाऱ्हो मान्दा रहेछन् यस्तो चलन भएका जातिलाई सभ्य कोही भन्दैनन्. यो अनर्थको चलन हो भन्ने कुरा परै रहोस्, भागी विदेश लाग्ने करियाहरू बढ्दै जानाले मुलुक र सरकारलाई हानि छ भन्ने कुरा पनी एकातिर रहोस्, सभ्यसंसारले के भन्लो हुन् भन्ने कुराको मात्र विचार राखे पनी सभ्यताको युग भनी कहलाइएको यो वेलामा उन्नति तिर लागेका कौनै सरकारलाई पनी अरु मुलुकहरूका मुख्यांजी आफ्नो मर्यादा कायम राख्ना निमित्त गर्नुपर्ने उपाय तुरन्त गरिहाल्नुपर्छ भन्ने नगराइरहँदैन. आफ्नो मुलुकको नाममा अभिमान गर्ने देशभक्त गैऱ्ह प्रजाप्राणीहरूले सरकारलाई यस काममा आड भरोसा दिनन् भन्ने बहुतै ठुलो उमेद छ.

शुद्ध चित्त भएका सबैले यो दासत्वको चलन साऱ्है खराब हो भन्दछन्; अघिदेखि नै सरकारले यो बेस गरी संझेका थिए. संबत् १८९६ सालमा चार वर्ण छत्तीशै जातले मर्दाना जनाना वा बालक कसैलाई मासी करिया तुल्याउन हूँदैन नतुल्याउनू भन्ने बेहोराको लालमोहर बहिराएको रहेछ. यति गरे पछि मुहानै शुक्न गए जस्तो भई करिया आफै घट्तै गई नामेट हुनजानेछ भन्ने सो सनदको आशय साफै देखिन्छ. यही कुराको ऐन बनी उसवेलादेखिका सरकारहरूबाट बराबर पुष्टयाइँ पाउँदै आइराखेकोछ. पछिपछिका ऐन करियाहरूको दशा सुधार्ना निमित्त बनेका हुनाले आफूसुखीहरूका उपर जुन जुन कुरा बिजाइ विद्युतका ठहरिन आउँदथे ती सबै करियाका उपरमा पनी लाग्ने हुनगए. करिया भागी नयाँमुलुक मोरङ् इत्यादि ठाउँमा गइरहेकालाई मालिकले धरपकड गर्न र कज्याउन पाउँदैन भन्ने ऐनहरू ती जगाहरूमा वस्ति वसाई गुल्जार गराउने मन्सायले पनी बनेका थिए.

भागी मुग्लान गई बसेका करियाका बारेको, करियाको खरिद बिक्री रोक्ने मतलबको र करियाहरूको पनी आफ्नो धनमाल हुन शक्तछ भन्ने बारेको ऐनहरू भएका कुराको केही संक्षेप अघि नै भइसकेकोछ, तर यी ऐनहरू उस्तो कामलागेका देखिएनन्, किन भने, केही अघि सम्म ऐनका किताबहरू अड्डाखालहरूमै मात्र रहन्थे, त्यसमा लेखिएको कुरा जान्ने थाहा पाउने थोरै मात्र हुन्थे, अहिले त्यस्तो छैन, विद्याको प्रचार हुँदै गएकोले र ऐनको किताब सबैले पाउन शक्ने हुन गएकोले, करियाहरूले पनी आफ्नो हक यति कुरामा छ भन्ने चाँडै नै थाहा पाउनेछन्. ऐनले गिल्ने फाइदा खोज्न पट्टी करियाहरू लागे भने आफूसुखी पनी हुन शक्नेछन्. मोरङ् नयाँमुलुकका ठाउँको आवहवा केही वर्ष अघि जस्तो खराब थियो, अहिले त्यस्तो छैन. दक्षिण सिमाना नजिक जताततै रेल भएकोले यो मुलुकको जुन ठाउँबाट पनी हिन्दुस्थान जान सजिलै भइराखेको छ. स्कूल पाठशालाहरू बराबर थपिँदै गएकाले यताउतिको हाल जान्ने बुझ्नेहरू झन झन बढ्दै आएका छन्. यसै अर्थले अब करिया आफूसुखी गराइएनन् भने ढिलो चाँडो मात्र हो आफैले बाटो खोजी परिणाममा आफूसुखी अबश्य नभइरहने छैनन्. रोकेर नरोकिने कुराको अघिबाट विचार राख्ता नुक्सानी जोगिन्छ भने त्यसो नगर्नु किन ? सरकारबाट अहिले जो बक्सन लागेकोछ सो नलिनू किन ? नभइनछाड्ने कुरालाई आफूले सत्कर्म नै गरेको जस्तो गरी आफै मध्यका एकाउन्नहजार मानिसले जय होस् भन्ने किन नगराउनू ? स्वदेशको प्रेम देखिने र लोकको हित हुने यस्तो आफ्नो देशमा हुनलागेको उद्योगमा अगुवा बनी यश किन नकमाउनू ? तिमीहरू बुद्धिमान् छौ, तिमीहरूले पछिसम्म हेरी पर्न आउने दु:खको विचार राखी अघिबाटै त्यसलाई हटाउने उद्योग गर्नु असल छ बन्धनमा परेका करियाका उपर सरकारको दयामायाको नजर भएको र आज सम्म गरिएको उद्योग सफल भएको छैन ता पनी सरकारबाट उपाय हुँदै रहेको कुरा तिनै ऐनबाट खुलासा देखिन्छ; तर दासत्वको यो चलन रहिरहनाको जवाफदेही जत्तिको करियाका मालिकहरूमा रहेको छ, उत्तिकै रकारमा पनी रहेको छैन भनी हामी भन्न सक्तैनौं.

करियाको संख्या कम भए ता पनी सबै दुनियालाई दु:ख हुन्छ भन्ने नचाहिने उपशंकाले होस् वा गरुँ कि न गरुँ भन्ने दोधारले होस् अथवा करियाको मोल दिनालाई धेरै रूपैयाँ खर्च गर्ने इच्छा नभएर होस्, अघि सरकारबाट आधाबुधो मात्र चित्त दिएकोले काम हुनशकेको थिएन. संसारका अरु सभ्य जाति सँग हामीहरूको हेलमेल बढ्दै गई उनको असल विचारको असर (नैतिक बल) हामीमा धेरै नै बढ्दै आइरहेकोले बखत अनुसार सुहाउँदो हिसाब सँग यस कुरामा चल्लालाई हामीले उद्योग गर्नुपर्ने हून आयो.

सती पोल्ने डर लाग्दो चलन अघि थियो. योचलन बन्द गर्नु हुँदैन भन्नेहरू कोही कोही थिए ता पनी संवत् १९७७ साल आषाढ २५ गते बृहस्पति बारका दिन ऐन बनी एकदम बन्द गराइएको तिमीहरूलाई यादै होला. अझ यो सतीको चलन ता हाम्रो धर्म मजहव सँग धेरै संबन्ध रहेको कुरा हो. बन्दगर्न ठीक हुँदैन भन्ने थोरै मानीसले शंका गरे जस्तै अहिले त्यसबाट कुन कुराको बेठीक देखिन आयो ? घर खेत जीव जन्तु पशु सम्पत्तिहरूमा जस्तो हक छ उस्तै आफू सरीकै मनुष्यमा हक दिलाउने यो दासत्वको चलन अन्याय र अपवित्रताको जगमा खडा भएको हो भन्ने चैतन्य चोला पाएका मनुष्यले जानेकै छ. कस्तै असल बरबन्दोवस्त भए पनी यसमा एक ज्यू जस्तो भइरहेको विगार र पापहरू यस चलनबाट छुट्टिन शक्तैन भन्ने सम्झिएकै छ फेरी करियाहरू र उनका मालिकको समेत आचारहरू दिन दिनै झन्-झन् अधोगतिमा डुब्दै जान लागिरहेका छन्, अझ यति मात्र होइन कि स्वच्छ भइरहेको आफ्ना जातिको शुभ कीर्तिमा यो चलन कालो दाग जस्तो भइरहेको छ भन्ने पनी हामीले बुझकै छौं. यस्तो जानी बुझीकन पनी सरकार भए, तिमी हामी भयौं सबैले यसमा जति दिनु सहनुपर्छ दिई सही कन पनी यो चलन हटाउने पूरा उद्योग नगरी रहनु के बेस हो ?. करिया अमलेख हुनजानाले केही थोरै बाधा परे पनी बहुतै थोरै मानीसलाई मात्र पर्ने होला भन्ने सेन्सस्को फारमबाट देखिएकोले सारा मानिसलाई कठिन पर्न जान्छ भन्ने शंकै लिनु परेन. एक शयमा ९९ जना हाम्रा मानीसहरू विना करियाले अहिल्यै पनी रहेकै छन्, दार्जलिङ् अल्मोडा र अरु आसपासका पहाडमा हामी जसरि रहेका छौं उस्तै हिसाब सँग रहेका हाम्रा आफ्नै मानिसहरूले पनी विना करियाले निर्वाह चलाइआएकै छन्, अघि असभ्यमा गनिएका मुलुकहरूमा पनी यो चलन उठिसक्यो, हामी मात्र यस कुरीतिको फन्दामा फसिरहेका छौं, यी सबै कुराको विचार राखी हाम्रा मुलुकका असल ठुला ठालुका पनी प्रतिनिधी जस्ता भई यो भारादारीमा सामेल भएका तिमी सबैले एक मुख भई यो निष्ठुर असभ्य दुराचार र बेकामको चलन बन्दगर्ने सम्मति दिने छौं भन्ने ठुलो आशा छ.

तिमीहरू सबैको संमति भए यो चलन एकदम नामेटैहुन शक्ने हुनाले त्यसै होस् भन्ने राय तिमीहरूको पनी हुनेछ भन्ने हामीलाई बहुतै ठूलो आशा लागेको छ. कौनै मुलुकमा पनी रहन आयोग्य भएको सार्है निर्धिन यो चलन रहनाले मनुष्यका मन बुद्धिमा बिलकूल विरोध खाने भइरहेको छ. यस अर्थले मालिकहरूलाई पनी नोक्सानी नपर्ने, घर गृहस्थका काम काजमा पनी भरसख बाधा नखाने हिसाब सँग तपसिल बमोजिमका कुराहरू तिमीहरूको राय लिनाका निमित्त देखाएको छ.

यसमा मालिक करिया दुवैलाई मडक नपरी यो काम सफल गराउने अर्को कुनै असल उपाय तिमीहरूले देखेका छौं भने त्यो पनी जाहेर गर.

**तपसील**

१. सवैका सल्लाहले शकेसम्मका नगीचको तारीख तोकी त्यसदिनदेखि सारा नेपाल राज्यभरमा कमारा कमारीको चलन नामेट गराउन अैन बनाउने.

२. करियाहरूको नामासी फिरिस्त खडा भएकोमा, दर्ता भई मालिकको दावा पुग्ने प्रमाण परिबन्धले ठहर्न आए जति गैह्र करियालाई अमलेख गराउन अैनवमोजिम लाग्ने मोल मालिकहरूलाई दिने बन्दोबस्त गर्ने.

३. तोकिएको दिनदेखि अमलेख भएका करियाहरूले आफ्ना आफ्ना मालिकसँग ७ वर्षसम्म रही कामदिने अर्थात् करियाहरूले मालिकका निमित्त कामगर्न करैलाग्ने, त्यसको सट्टामा मालिकले तिनीहरूलाई साबिक बमोजिम खान लाउन दिई राख्ने.

यो तजबीजले मालिकको दावा लाग्ने ठहर जति गैह्र करियालाई पर्ने ऐन बमोजिमको मोल दिने मन सरकारको छ भन्ने र करियाहरू सवै एकैचोटी अमलेख भएका मितीदेखि ७ वर्ष सम्म ती अमलेख भएका करियाहरूले विना तलब अघि भने बमोजिम आफ्ना मालिक सँग रही काम दिइरहने हुनाले त्यसबाट मालिकरूलाई थप फाइदा मिल्ने हुन्छ भन्ने बुझिहाल्ने छौं. सो मोल बापत आएको दाम शयकडा १० को सरल ब्याजमा लगाई वर्सेनी आएको ब्याज सावामा थपी लगानी गर्दै गरे ७ वर्षमा पुगनपुग दोबर भइसक्तछ. चल्ती दर शयकडा १६ मा लगानी गरे करिव तेवर जती हुन जान्छ. अमलेख भएका ती करियाहरू त्यो ७ वर्षसम्म अघिकै सहर आफ्ना मालिककहाँ रहने हुनाले उतिञ्जयाल सम्म क्रमैले ज्यालादारीबाट काम लिने रीतमा सरासर चल्नालाई मालिकलाई यो ७ वर्षको समय प्रशस्त हुनेछ. अमलेख भएका करियाहरूलाई पनी आफ्नो नयाँ स्थितिमा बानी पर्दै जानेछ. ज्याला मजुरीको दर पनी क्रमै सँग आफसेआफ ठिक ठाउँमा आउनेछ. यसरी अमलेख भएका करियाले आफूसुखीले काम दिए सरह ७ वर्ष काम दिइसके पछि त्यही काम गर्नामा कोही नामञ्जुरी गर्ने होओइनन्, भइहाले भने पनी आसपासमा ज्याला मजुरी गरी वस्ने हुनजानन्. वास्तवको कुरा क्या हो भने त्यो ७ वर्ष मालिकहरूले विचार पुर्‍याई काम गर्दै गई करियालाई खान लाउन दिंदा लाग्ने खर्च क्रमै सँग ज्याला मजुरीमा लाउने गर्दै गए भने करियाबाट हुने गरेको काम

ज्याला दर्माहादारीबाट सरासर चली करिया नभए कठिन पर्न आउला कि भन्ने खाली मनै मनको शंका धेरै त्यसै अवश्य विलाउन जानेछ.

सबै करियालाई एकैचोटी अमलेख गर्दा करियाहरू माथि मालिकको हक र तिनी माथीको दावाका बारेमा झगडा उठ्ने सम्भवको विचार हामीले राख्नुपर्छ. कोही अन्यायमा नपरुन् सवैले न्याय पाऊन भन्नाका निमित्त यस्तो सुभाशंका केही परिआयो, अथवा करिया हो होइन भन्ने कुराको मालिक करियाको झगडा पऱ्यो भने. सरकारबाट दुबैथरीलाई आफ्नो हक साबित गर्न पाउने मौका हरतरहबाट मिल्ने बन्दोबस्त हुनेछ. त्यस्तोमा अघि खडा भएको नामासी फिरिस्तमा दर्ता नभएकोलाई मेरो करिया भनी कसैले भनेको पक्षमा, त्यो कुरा साँचो हो के भन्ने सुभाशंका नभइरहनेछैन. यसमा काम थालिने भए पछि सवै कुराको विचार राखी, भरसख कसैलाई दुःख पीर नपर्ने र काम पनी चाँडो तय हुने हिसाब सँग जाँचबुझ गर्ने अफिसरहरूका नाममा सवाल सनद हुनेछ.

करियाका मोलको हकमा ऐन बमोजिमको मोल पक्रनु नै बेस देखिन्छ. अरु ठाउँमा अघि करियाको चलन छँदा अरु जिन्सीमाल सरह करियाहरूको पनी बजारै लागी बेच बिखन हुने चलन हुनाले मोल पनी यति भन्ने थाहा हुन्थ्यो. यहाँ त्यस्तो करियाको बजार लाग्ने रीत छैन. खरीद विक्री हुने गर्छ ता पनी मानिसहरू आफूआफूमै कुरा मिलाई लिने दिने गर्ने हुनाले मोल यति भन्ने निस्तुक हुँदैन. लिने दिनेको गर्ज र अरु कुराको विचारले जो मोल वस्यो त्यसैमा लिनु दिनु हुन्छ कहिले काहीं किन्नेलाई खट्टा भइराखेको हुन्छ, खोज्दा पाइँदैन; त्यस्तो खाँचो परी आउँदा अथवा किनूँ लिउँ भन्ने मन भएको करिया किन्नु परेमा ऐन बमोजिमको मोल भन्दा बढता पर्न जाने र, कोही मालिक सँग आफूलाई चाहिने भन्दा बढी करिया भएमा, किन्ने कोही पाइयो भने जो मिलेको मोल लिई दिने पनी गर्दछन्. यसैले लिने दिनेको दरकार, चाह र बेचाहको अनुसार मोल हुनजाने गर्छ. सरदर मोल कति पर्न आउँदों रहेछ भनी हेर्नालाई ठाउँठाउँबाट यो १६ वर्ष यसो लिने दिने गरेको मोल बुझी एकट्ठा गरी हेर्दा, यौटी जवान कमारीलाई ५० रूपैयाँदेखि ३५० सम्म हालेको देखिन आयो. त्यसो हुनाले सबैको चित्त बुझ्ने गरी सरदर मोलको अंक ठीक गर्न शकिएन. चलिआएको खरिद विक्रीको दर नै ठीक मानौं भने पनि, त्यसमा पनी बहुधा भरपर्दो किसीमको कागजपत्र पाइने संभव हुँदैन; त्यसै कारणले अैनबमोजिमको मोलै सदर मान्नुपर्ने देखिन आउँछ.

अघि मालिकका भरमा रहेका करियाहरूमध्ये अब सात वर्ष पछि काम दिन नशक्ने बुढाबुढी रोगीहरू समर्थ भएका छोरा छोरीका भरमा र, बालकहरू बाबु आमाका भरमा रहनजाने हुनेछन्. अमलेख भएका करियाहरू पनी आफूलाई र आफ्ना जहानलाई समेत पाल्नाका निमित्त ज्यालादारी कामगर्ने भई रहने हुनेछन्. तिनिहरूको ज्यालाको दर पनी गाउँ घरमा चलेको दर भन्दा फरक हुनेछैन. बुद्धिमान् मालिकले अमलेख भएका करियाहरूलाई ७ वर्षसम्म आफू सँग रहँदा खान लाउन दिई आफै सँग राख्ने नगरी, नगद वा जिन्सी जो हुन्छ मजुरी नै दिने रीत चलाउनेछन्. भर पर्ने सामर्थ्यवान् कोही नभएका बुढाबुढी रोगी करियाहरू कसैका हुनन् तिनीहरूलाई अहिले पालिराखे झैं मालिकहरूले दयामाया राखी पालिराखन्यैछन्. सरकारबाट मोल पाई तोकिएको सात वर्ष सम्म साथ राखी त्यसपछि दयामाया केही नराखी त्यस्तालाई मालिकले निकाला गरिदिए भने, सरकारी पाकशालामा शरण पाउने हुन जानेछन्. यसमा, यो वन्दोबस्त सँग अनुकूल मिलाई बस्नेहरूमा, आफ्नै फाइदाको विचार राम्रो गरी पुऱ्याउने मालिकले अमलेख भएका करियालाई यौटा वासको बन्दोबस्त गरिदिन बेर छैन. दयामाया देखाई कामकुरा गर्नाले दासत्वको बन्धन भन्दा प्रेमको बन्धन बलियो गराउने तिनीहरू हुनजानन्. गर्ज परेको वेलामा केही अलिकति सरसापटी र बक्स समेत दिई तिनीहरूको भलाइ तिर अलिकति याद विचार राखिदिने गर्नाले पनी त्यसबाट निक्कै असर हुनजान्छ. अंसतुष्ट करियाले भन्दा मालिकको गुन मानी रहेका घर्ति नोकर चाकरले कस्तै पनी बढिया काम दिने हुन्छन्. अमलेख भए पछि करियाहरू सबैले छोडी जानन् भन्ने शंका मान्नेहरू जो छन्. तिनीहरूले या त सार्है बढाई कुरा गरेका हुन् भन्नुपर्छ, या सार्है परिपीराउ गरी तिनलाई राखेको हुँदा करियाहरूले छाडी जानन् भन्ने डर मानेको हुनुपर्छ. एकदम सबै अमलेख गर्दा बाधा छ भन्ने बारेमा अघिनै भन्नु पर्ने कुरा भनिसकेको छु. आफुसुखीहरूबाट काम लिने चलन सारा दुनियाँ भर चलेको छ. चलन हुँदै गए पछि यसको फाइदा आफै थाहा हुनेछ. यसमा विचार गर्नुपर्ने यौटा कुरा के छ भने, अमलेख भएका करियालाई ७ वर्ष सम्म त्यहीं मालिक सँग रहिरहनुपर्ने गर्नु बढिया होला वा, तोकिएको मितीदेखि पुरापुरै तवर सँग अमलेख गरी छाडिदिनु बढिया होला, तिमीहरू के भन्दछौं ?. दासत्वको चलन बन्दगर्ने विषयमा इतिहासका लेखहरू पढिए भने अंग्रेजका मातहतका कुनै मुलुकहरूमा करिया अमलेख भए पछि केही वर्षसम्म मालिकसँग वस्न करै लाग्ने गरिरहेको देखिन्छ. फेरी तिनैका कुनै नयाँ वस्तिका मुलुकहरू र अरु अरु ठाउँमा तुरुन्त पूरा तवर सँग बन्द गर्न बेस सम्झेका रहेछन् भन्ने पनी देखिन आएको छ. यो कुराको निर्णय तिमीहरूमा धेरैको राय बमोजिम हुनेछ. एकातिरबाट हेर्दा अमलेख भएका करियाहरू मालिकसँग

रहनुपर्ने गर्दा आफ्नो घरको अंजाम मिलाउँदै जाने मौसर मालिकले पाउने र, करियाको मोल वापत आएको दाम बढाउन पाउने देखिन आउँछ. अर्कातिरबाट हेर्दा यो बन्दोबस्तले कसै कसैलाई बेसुविस्तै गराउला कि भन्ने पनी देखिन्छ.

दासत्वको चलन हालै एकदम नामेट गर्न ठीक नसम्झेको पक्षमा, अघि विस्तार गरेका अवस्थाहरूको विचार राखी सरकारबाट यो चलनको साह्रै घटिया कुचालहरू निर्मूल गर्ने केही उपाय ता लाचारी साथ नगरी हुनेछैन. करियाहरूमा एकै जाहान गरी बसेका कसैलाई बेचविखन गरी छुट्याउन पाइँदैन भन्ने गरी तिनीहरूलाई आफ्ना जहानबच्चासँगको सहवास रहने दिलजमी गरिदिनुपर्नेछ, यसो गर्दा जाहान बच्चा भएका करियाको खरिद विक्री रोकिने हुन जानेछ.

हाम्रा धर्मशास्त्रपुराणहरूमा पनी मानिसको खरीद विक्रीलाई घिनाएकै रहेछ भन्ने कुरा यी उद्धार गरेका बचनहरूबाट देखिन्छ :-

"नारीणां विक्रयं कृत्वा चरेच्चन्द्रायणं व्रतम् ।

द्विगुणं पुरुषस्यैव व्रतमाहुर्मनोषीण: ॥"

अपरार्क चतुर्विंशतिमत

अर्थात्- स्वास्नी मानिसको विक्री गरेमा चान्द्रयाणव्रत, लोग्ने मानिसको विक्री गरेमा दुगुना चान्द्रायणव्रत गर्नू भनी आचार्यहरू भन्दछन्.



"कान्या हयं च दासीं च स्वर्गहे सम्भवान् शुभान् ।

पोषयत्वा द्विजो लोभात्पश्चादेतांश्च विक्रयेत् ॥

स भुक्तवा यातना: सर्वा:पश्चाद् व्याधो भवेदिह ॥"

विष्णुधर्मात्तर

अर्थात्- आफ्ना घरमा जन्मेका कन्या घोडा करियाहरूलाई पाली पोसी पछि लोभले विक्री गऱ्यो भने त्यो द्विजाति (ब्राह्मण क्षत्रिया वैश्य) नरकको सवै यातना भोगेर पछिबाट ब्याधाको योनिमा जन्मन्छ ।

"द्विज सम्पाद्य यो दासीं गृहधर्मसुखाप्तये ।

पश्चात्तां विक्रयेद्यत्नात्स चाण्डाले भवेभ्द्रुवि ॥"

देवनधर्म

अर्थात्- ब्राह्मण क्षत्रिय वैश्यहरूले अघिबाट आफ्नो घरगृहस्थीको सुविस्ताको खातिर करिया जोरेर पछि त्यसलाई विक्री गरियो पृथ्वीमा चण्डाल हुन्छ।

"अर्थात्- द्विजोऽनुगृहीयाभ्दोगार्थ पतितो भवेत्।

नित्यं नैमित्तिकं काम्यं सद्यः क्षरति पापिनः।

विक्रयेद्यदि तां मूढश्चाण्डातत्वं तदाम्पुयात्॥"

मार्कण्डेय पुराण

अर्थात्- द्विजातिले भोगको खातिर दासिको संग्रह गरे त्यसले गरेको नित्य नैमित्तक काम्य तीनै किसिमको धर्मकर्म नाशहुन्छ, दासीलाई विक्री गरे चाण्डाल हुन्छ।

यस्तै अरु स्मृति पुराण निबन्धहरूमा पनी यस विषयमा दोष देखाउने बचनहरू पाइन्छन्. त्यसै कारणले करिया खरीद विक्री गर्ने चलन बन्दगरी उनका जहानबच्चाहरूको आपसमा बिछोड नहुने बन्दोबस्त मिलाऔं, ऐन बमोजीम मोल तिरे बेच्न बिखन भएका करियाहरू अमलेख हुन पाउने ऐन भइराखेकोमा तिनलाइ निखनी लिनालाई हकवाला अघि नसरे, सरकारै तिनीहरूका हकवाला भई निखनी अमलेख गराइदिई यो ऐनको मनसाय पुऱ्याऔं. मालिकहरूलाई कमारा कमारी बेचन मन भएमा जहिले ल्याए पनी सरकारबाट मोल तिरी लिई अमलेख गरिदिने हुनजाला; त्यसरी अमलेख भएका करियाहरू ज्याला दमोहामा अघिल्लो मालिक सँग वस्ने भए बस्नन् अथवा सो मालिकलाई छाडने भए छाडी आफूखुसी गर्नपाउने हुनेछन. अर्को कुरा क्याहो भने, आफूले आर्जन गरेको धन आफ्नै हुन्छ भन्ने ऐन करियाहरूलाई थाहा नभइरहेकोमा अहिले थाहा पाए पछि आफ्नो कमाइबाट आफ्नो घरद्वार जोर्ने मौका पाउने रहेछौं भन्ने ज्ञान भई तिनीहरू झन् मेहनती हुनजानेछन्. यस्ता तरहले आफ्नो जन्मभुमिमा प्रेम बसाउने मुख्य दुइ कुरा आफ्नो जाहानवच्चा भन्न र, आफ्नो घरबार भन्न पाउने बाटो-यिनीहरूलाई हुनजानेछ; तर विचार गरी हेर, यत्तिकै भए पुग्यो भनी सरकारले त्यत्तिकैमा चुपलाग्न शक्तैन. कमारा कमारीको खरीदविक्री रोकिन गए पनी तिनीहरूका सन्तान र सन्तानका सन्तानबाट करियाहरू झन् झन् धेरै हुँदै जानेछन्, निरन्तर हुँदै गइरहेका सन्तानहरू किन्दै अमलेख गर्दै गर्ने बेहदको बोझा सधैं सरकारले उठाइरहन पनी निर्वाह हुनेछैन. त्यसो हुनाले अघि भनेको ऐनमा अर्को ऐन थपी, यौटा तारीख तोकी सो दिनदेखि कमारा

कमारीहरूबाट जन्मेका वा आफूसुखीलै कमारी राखी जन्माएका छोरा छोरीहरू सबै त्यसै आफूसुखी हुनेछन् भन्ने गर्नुपर्ने छ. सो गर्नालाई तिमीहरू सबैको सल्लाहमा कुन तारीख तोक्न ठिक ठहराउने हौ सो हेरी तोक्ने काम हुनेछ. मुलुकैलाई नराम्रोकलंक भइरहेको दासत्वको चलन मेट्ने दृढनिश्चय साँच्चिकै उत्साह साथको उद्योग विना कदापि पुग्न नशक्ने हुनाले अैन बमोजिम मोल मालिकलाई दिई, ९ वर्ष र ९ वर्ष मनीका बालक करियाहरू गैह्लाई अघि भने बमोजिमका तिमीहरूले तोकेको दिनदेखि अमलेख गराइदिने सरकारबाट मन गरेका छन्. तोकिएको दिन सबैलाई थाहा दिइनेछ. मालिकहरूले सरकारी अड्डाखालमा आई आफ्नो हक सावित गरी पाउनैपर्ने मोल लिनन्. त्यसो नगरी चुपचाप रहनेहरूको थैली भुस हुनजाला. सामर्थ्यवान् नभए सम्म ती अमलेख भएका बालकहरू शकेको कामकाज गरी आफ्ना आमा बाबुका मालिकै सँग रहँनन्. सामर्थ्यवान् भए पछि तिनीहरू आफुखुसी भए वस्लान्. यसो गर्दा अघिअघिका ऐनले नयाँ ज्यू मास्न नपाइने भइराखेकोमा यो थप अर्को ऐन गर्नाले पछि जन्मेकाबाट करियाहरू थपिने बाटो थुनिने भइ हाल्नेछ. अझ यति गर्दा पनि दासत्व निर्मूल हुन धेरै समय लाग्ने भई उतिंज्याल सम्म मुलुक माथि लागिरहेको कलंक रहेको रह्यै भइरहनेछ ता पनी, धेरैको रायमा एकदम बन्दहुनु भन्दा यसै गर्नु असल छ भन्ने ठहर्छ भने, यसमा गौर विचार गरी दासत्व नामेटको उठान यसलाई सम्झी सरकारबाट त्यही कुरा मजुर भइहाल्ला. सन् १८९७ मा जांजीवार देशमा दासत्व नामेट हुनु भन्दा अगाडि. यस्तै छाँटको अैन उहाँ पनी सन् १८८९ र १८९० मा हुन गएको थियो. त्यस्तै कुनै कुनै अरु ठाउँमा पनी भएको छ.

यो बडो असजिलो कुरा छ भनी अघि उठानैमा मैले भनिहालेको छु. हामी मध्यका मानीसमा मालिक चौद्ध हज्जार, बाँकी करिया गरी खाली जम्मा छैसट्ठीहज्जारैको मात्र घर गृहस्थीका वास्ताको कुरा यो हो तापनी के गर्नाले सवै भन्दा बढिया हुनेहो सो कुरामा हामी सवैको सरसल्लाह मिलाई सो मुताविकको उपाय गर्नाले नै असल हुने किसिमको यो काम हुनाले धेरै कुराको दृष्टि दिई यस विषययमा यतिको कुरा गरियो; तर जुत्ताले कसे पोलेको लाउनेले मात्र ठीक थाहा पाउने भए झैं, यसमा पनी सव्यासव्य दुवै तरफको कुरा विचार रहे नरहेको ठीक जान्न शक्ने करिया र तिनका मालिकहरू नै अरु भन्दा विशेष हुन्छन्. सरकारबाट गौर विचार गर्नालाई आजको यो विषयका पृथक् पृथक् कुराहरूमा तिमीहरू सबैको राय मागेको छ. आफ्नो आफ्नो राय लेखी सहीछाप गरी दाखील गर. कुन कुरा गर्न ठीक होला भनी किसिम किसिमका उपायका कुराहरू तिमीहरूको सामन्ने राखिएको छ. त्यसमा मुख्य मतलब हासिल हुने अर्कै केही उपाय छ भने सोही माफिकको राय देओ.

अथवा अहिले यहाँ भनेका उपायहरूमा जुन चाहीं बढिया लाग्छ "यो उपाय गरे बढिया होला" भन्ने साफ साफ देखाई राय जाहेर गर. तिमीहरूले राय दिएकोमा मुनासिव कदर साथको विचार राखी सरकारबाट काम हुनेछ. असल कामको फल असलै हुन्छ भन्ने तिमीहरूलाई थाहै छ. असल गर्नाले के मालिक के करिया सवैलाई समान देख्ने, सर्वशक्तिमान् परमेश्वरको अनुग्रह नभइरहँदैन, करियालाई पार गरिदिनाले हुने पुण्य तिमीहरूले जानेकै छौ भने यो चलन बन्द गर्नामा र अफ्र करियाहरूको अवस्था सुधारिदिनामा समेत सहमत भई सरकारलाई हारगुहार तिमीहरूले अवश्य दिनेछौ भन्ने लागेको छ. यो कामलाई चौधलाख रूपैयाँ अघि नै अर्पण गरिसकेको छु. फेरी थप्न चाहिए जति भरवित्तो गरीकन पनी पुऱ्याइदिनामा बाँकिराख्ने छैनँ, न्याय, धर्म र दया भनेको ठूलो कुरा हो. यो बाहेक हाम्रो जातीय समाजको ठुलो हित, मुलुकको बढिया नाम, जसको शरीर आत्मा समेत दासत्वको बन्धनले बाँधिएको छ, त्यस्ता एकाउन्न हजार स्वदेशी भाइहरूको सुख दुःख, यस बखत तिम्रो हातमा रहेको छ. यस अर्थले आफ्नो देशको गौरव स्वरूप भएका ठुला महानुभाव पुर्खाहरूका वँश सुहाउँदो स्वार्थीपनाले नमुछिएको राय तिमीहरूको होओस्.

सज्जन हो ! जो मैले भने., सर्वसाधारणका उपरको आफ्नो कर्तव्य सम्झी भनेको हुँ, करियाका मालिकहरू सँग मेरो राग वा द्वेष केही छैन. मालिकलाई मोल भर्ना र करियालाई अमलेख गर्नु यत्तिकै मेरो मनसुवा हो. यही मनसुवा पूर्ण गराउनामा मेरो आशा खडा छ, यसैमा तिमीहरूको भरवित्तो मद्दत बडो उत्कण्ठा साथ मागिरहेको छु.

परमात्माले हामी सवैलाई असल बाटो लाग्ने बुद्धि, सो बाटो पक्री रहन शक्ने हियाउ र; यसमा आफ्नो आफ्नो काम गर्न शक्ने सामर्थ्य देऊन्. फेरी उनै ईश्वरले दासत्वको बन्धनमा परिरहेकाहरू माथि करुणा जगाई तिनको सहायता तिर सवैको मति लगाइदिऊन भनी, आग्रह साथको प्रार्थना गरी, तिमीहरूले सावधानी साथ यो सवै कुरा सुनिदिएकोमा धन्यवाद दिंदै, ईश्वर शिरमा र उत्साह मनमा राखी, गर्न लागेको यो कार्य सिद्ध गर्न शकौं भन्ने ठुलो आशा लिई अब यो लामो व्याख्यान समाप्त गर्दछु. शुभम् ।

## फिरिस्त (क)

करियाको पहिलो बालक १६ वर्षको उमेर सम्म पुग्दा लाग्ने जम्वै खर्चलाई बेगलै बेगलै दरको ब्याजमा लगाएको भए त्यति टायम्मा कति हुने रहेछ सो कुरा यसबाट देखिनेछ आमा चाहींले काम गरिहाल्ने हुनाले त्यसलाई लाग्ने खर्च यसमा छाडिदिएकोछ

| असामी.......... | शयकडा १० को ब्याजमा लाउँदा हुने | शयकडा १६ को ब्याजमा लाउँदा हुने | शयकडा २० को ब्याजमा लाउँदा हुने | ब्याजमा नलाई खाली खर्चमात्र जोड्दा हुने | कैफियत |
|---|---|---|---|---|---|
| कमारी किन्दा ऐ.ब.मोल<br>एक वर्षको ब्याज<br>जम्बा<br>सुतकेरी हुँदाको र अरु खर्च | १२०।<br>१२।<br>१३२।<br>१०। | १२०।<br>१९।२०<br>१३९।२०<br>१० | १२०।<br>२४।<br>१४४।<br>१०। | १२०।<br>०।<br>१२०।<br>१०। | |
| जम्बा<br>पहिलो वर्षको बालकको खर्च<br>एक वर्षको ब्याज | १४२।<br>०<br>१४।२० | १४९।२०<br>०<br>२३।८० | १५४।<br>०<br>३०।८० | १३०।<br>०<br>० | |
| जम्बा<br>दोस्रावर्षको बालकको खर्च<br>यस वर्षको ब्याज | १५६।२०<br>०<br>१५।६० | १७३।<br>०<br>२७।६० | १८४।८०<br>०<br>३६।८० | ० | |

| | | | | | |
|---|---|---|---|---|---|
| जम्बा<br>तेस्रावर्षको बालकको खर्च<br>यस वर्षको ब्याज | १७१।८०<br>०<br>१७।१० | २००।६०<br>०<br>३२। | २२१।६०<br>०<br>४४।२० | <br>० | |
| जम्बा<br>चौथावर्षको बालकको खर्च<br>यस वर्षको ब्याज | १८८।९०<br>१२।<br>१८।८० | २३२।६०<br>१२।<br>३७।१० | २६५।८०<br>१२।<br>५३। | १३०।<br>१२। | महिना को १ रुपैञा ले |
| जम्बा<br>पाँचौवर्षको बालकको खर्च<br>यस वर्षको ब्याज | २१९।७०<br>१२।<br>२१।९० | २८१।७०<br>१२।<br>४४।९० | ३३०।८०<br>१२।<br>६६। | १४२।<br>१२। | ऐ.ऐ |
| जम्बा<br>छैटौवर्षको बालकको खर्च<br>यस वर्षको ब्याज | २५३।६०<br>१५।<br>२५।३० | ३३८।६०<br>१५।<br>५४। | ४०८।<br>१५।<br>८१।६० | १५४<br>१५। | महिना को १। २५ हो |
| जम्बा<br>सातौवर्षको बालकको खर्च<br>यस वर्षको ब्याज | २९३।९०<br>१५।<br>२६।३० | ४०७।६०<br>१५।<br>६५।१० | ५०५।४०<br>१५।<br>१०१। | १६९।<br>१५। | ऐ.ऐ |
| जम्बा | ३३८।२० | ४८३।७० | ६२१।४० | १८४। | महिना |

| | | | | | |
|---|---|---|---|---|---|
| आठौवर्षको बालकको खर्च | १८। | १८। | १८। | १८। | को १। |
| यस वर्षको ब्याज | ३३।८० | ७७।६० | १२४।२० | | ५० ले |
| जम्बा | ३९०। | ५८३।६० | ७६३।६० | २०२। | ऐ.ऐ. |
| नवौंवर्षको बालकको खर्च | १८। | १८। | १८। | १८। | |
| यस वर्षको ब्याज | ३९। | ९३।२० | १५२।८० | | |
| जम्बा | ४४७ | ६९४।८० | ९३४।२० | २२०। | महिना को |
| दशौंवर्षको बालकको खर्च | २४। | २४। | २४। | २४। | २ रुपै |
| यस वर्षको ब्याज | ४४।७० | १११। | १८६।८० | | ञाले |
| जम्बा | ५१५।२० | ८२९।८० | ११४५। | २४४। | ऐ.ऐ. |
| एघारौंवर्षको बालकको खर्च | २४। | २४। | २४। | २४। | |
| यस वर्षको ब्याज | ५१।१० | १३२।६० | २२९। | | |
| जम्बा | ५९१।२० | ९८६।४० | १३९८। | २६८। | महिना को |
| बाहौंवर्षको बालकको खर्च | २७। | २७। | २७। | २७। | २।२५ |
| यस वर्षको ब्याज | ५९।१० | १५७।७० | २७९।६० | | ले |
| जम्बा | ६७७।३० | ११७१।१० | १७०४।६० | २९५। | ऐ.ऐ. |
| तेहौंवर्षको बालकको | २७। | २७। | २७। | २७। | |

| | | | | | |
|---|---|---|---|---|---|
| खर्च<br>यस वर्षको ब्याज | ६७७० | १८७४० | ३४०।८० | | |
| जम्बा<br>चौधौंवर्षको<br>बालकको खर्च<br>यस वर्षको ब्याज | ७७२।<br>२७<br>७७२० | १३८५।५०<br>२७<br>२२१।६० | २०७२।४०<br>२७<br>४१४।४० | ३२२।<br>२७ | ऐ.ऐ. |
| जम्बा<br>पन्धौंवर्षको बालकको खर्च<br>यस वर्षको ब्याज | ८७६।२०<br>३०।<br>८७६० | १६३४।१०<br>३०।<br>२६१।४० | २५१३।८०<br>३०।<br>५०२।६० | ३४९।<br>३०। | महिनाको २।५० ले |
| जम्बा<br>सोहौंवर्षको बालकको खर्च<br>यस वर्षको ब्याज | ९९३।८०<br>३०।<br>९९।३० | १९२५।५०<br>३०।<br>३०८। | ३०४६।४०<br>३०।<br>६०९।२० | ३७९।<br>३०। | ऐ.ऐ. |
| जम्बा | ११२३।१० | २२६३।५० | ३६८५।६० | ४०९। | |

## फिरिस्त (ख)

करियाको दोस्रा र त्यसपछि जन्मेका हरेक बालक १६ वर्षको उमेरसम्म पुग्दा लाग्ने खर्चलाई त्यति टायममा अैनबमोजिमको शयकडा १० मात्रको ब्याजमा लाउँदा कति हुने रहेछ सो कुरा यसबाट देखिनेछ; यसमा पनि आमाका निमित्तको खर्च फिरिस्त (क) बमोजिम छाडिदिएको छ-

| असामी | अैन वमोजिम शयकडा १० ब्याजमा लाउँदा हुने | ब्याजमानलीई खाली खर्च मात्र जोड्दा हुने | कैफियत |
|---|---|---|---|
| सुत्केरी र अरु खर्च<br>पहिलो वर्षको<br>बालकलाई खर्च<br>ब्याज | १०।<br>०<br>१ | १०<br>०<br>० | यदि कमारीले ६ वटा छोराछोरी पाई भने तिनीहरुको ६ वर्षको उमेर सम्मलाई लाग्ने खर्च शयकडा ब्याजमा लगाएको भएपहिलो बालकलाई फिरिस्त (क) मा देखाए बमोजिम २९४ रुपैया र पछि जन्मने अरु ५ बालकलाई यही फिरिस्तमा देखाए बमोजिम ६२ रुपैया हुने हुनाले सो दुवै कलमको रुपैआ जोडदा जम्बा ६०४ हुने अथवा करिब १०१ रुपैञा जति हरएक बालकका निमित्त लाग्ने भयो. |
| जम्बा | ११। | | |
| दोस्रावर्षको<br>बालकलाई खर्च<br>ब्याज | ०<br>१।१० | ०<br>० | |
| जम्बा | १२।१० | १०। | |
| तेस्रावर्षको<br>बालकलाई खर्च<br>ब्याज<br>जम्बा | ०<br>१।२०<br><br>१३।३० | ०<br>०<br><br>० | |
| चौथावर्षको | ० | ० | |

| | | | |
|---|---|---|---|
| बालकलाई खर्च ब्याज | १।३० | | यस्तै हिसाब सँग यदि ८ बालक त्यस कमारीबाट जन्मे भने पहिलाको २९४ र पछि हुने ७ के ६२ ले ४३४ समेत जम्बा जोडदा ७२८ हुने हुनाले जनही ९१ रुपैञा पर्न आउने भयो. बालक करियाबाट सानो तिनो केही काम पाइने हुनाले यही हिसाबमा पनी जनही ३।३ रुपैञा कटाई राखता ६ बालकलाई जनही ९८ र ८ बालकलाई जनही ८८ रुपैया पर्न आउने हुन्छ. |
| जम्बा | १४।६० | ० | |
| पाँचौ वर्षको बालकलाई खर्च ब्याज | १२।<br>१।४० | १२। | |
| जम्बा | २८। | २२। | |
| छैठौं वर्षको बालकलाई खर्च ब्याज | १२।<br>२।८० | १२। | |
| जम्बा | ४२।८० | ३४। | |
| सातौं वर्षको बालकलाई खर्च ब्याज | १५।<br>४।२० | १५। | |
| जम्बा | ६२। | ४९। | |
| आठौं वर्षको बालकलाई खर्च ब्याज | १५।<br>६।२० | १५। | |
| जम्बा | ८३।२० | ६४। | |
| नवौं वर्षको | १८। | १८। | |

| | | |
|---|---|---|
| बालकलाई खर्च<br>ब्याज | ८।३० | |
| जम्बा | १०९।५० | ८२। |
| दशौं वर्षको<br>बालकलाई खर्च<br>ब्याज | १८।<br>१०।९० | १८। |
| जम्बा | १३८।४० | १००। |
| एघारौं वर्षको<br>बालकलाई खर्च<br>ब्याज | २४।<br>१३।८० | २४। |
| जम्बा | १७६।२० | १२४। |
| वाह्रौं वर्षको<br>बालकलाई खर्च<br>ब्याज | २४।<br>१७।६० | २४। |
| जम्बा | २१७।८० | १४८। |
| तेह्रौं वर्षको<br>बालकलाई खर्च<br>ब्याज | २७।<br>२१।७० | २७। |
| जम्बा | २६६।५० | १७५। |
| चौधौं वर्षको | २७। | २७। |

| | | |
|---|---|---|
| बालकलाई खर्च<br>ब्याज | २६।६० | |
| जम्मा | ३२०।१० | २०२। |
| पन्ध्रौं वर्षको<br>बालकलाई खर्च<br>ब्याज | २७।<br>३२। | २७। |
| जम्मा | ३७९।१० | २२९। |
| सोह्रौं वर्षको<br>बालकलाई खर्च<br>ब्याज | ३०।<br>३७।९० | ३०। |
| जम्मा | ४४७। | २५९ |
| सत्रौं वर्षको<br>बालकलाई खर्च<br>ब्याज | ३०।<br>४४।७० | ३० |
| जम्मा | ५२१।७० | २८९। |

## फिरिस्त (ग)

कमारीलाई अैन बमोजिम १२० मा नकिनी चलेको चलनले ३५० रुपैआमा खरिद गर्नु पर्ने हुनाले त्यस रुपैञालाई तपसिल बमोजिम बेगलै बेगलै ब्याजमा लगाएको भए तपसिल बमोजिमको रुपैया १६ वर्षमा हुन आउने रहेछ.

| असामी | शयकडा १० ब्याजमा लाए हुने | शयकडा १६ ब्याजमा लाए हुने | शयकडा २० ब्याजमा लाए हुने | कैफियत |
|---|---|---|---|---|
| कमारीको मोल<br>ब्याज | ३५०।<br>३५। | ३५०।<br>५६। | ३५०।<br>७०। | यदि करियाबाट ६ वटा बालक जन्मे भने ६ वर्षको उमेरको हुँदा लाग्ने खर्चलाई शयकडा १० ब्याजमा मात्र लाएको भए ७४२ हुने र अरु ५ लाई ६२ का दरले ३१० हुने हुनाले सो जम्बै जोडदा १०५२ अथवा जनही १७५ पर्न आउने र ८ जना बालक भ एभने जनही १४७ हुने देखिन्छ. |
| जम्बा | ३८५। | ४०६। | ४२०। | |
| सुतकेरी र अरु खर्च | १०। | १०। | १०। | |
| जम्बा | ३९५। | ४१६। | ४३० | |
| पहिलो वर्षको बालकलाई खर्च ब्याज | ०<br>३९।५० | ०<br>६६।५० | ०<br>८६। | |
| जम्बा | ४३४।५० | ४८२।५० | ५१६। | |
| दोस्रो वर्षको बालकलाई खर्च ब्याज | ०<br>४३।४० | ०<br>७७।१० | ०<br>१०३।२० | |
| जम्बा | ४७७।९० | ५५९।६० | ६१९।२० | |

| | | | | |
|---|---|---|---|---|
| तेस्रो वर्षको बालकलाई खर्च ब्याज | ०<br>४७।७० | ०<br>८९।४० | ०<br>१२३।८० | |
| जम्मा | ५२५।६० | ६४९। | ७४३। | |
| चौथो वर्षको बालकलाई खर्च ब्याज | १२।<br>५२।५० | १२।<br>१०३।८० | १२।<br>१४८।६० | |
| जम्मा | ५९०।१० | ७६४।८० | ९०३।६० | |
| पाँचौ वर्षको बालकलाई खर्च ब्याज | १२।<br>५९। | १२।<br>१२२।२० | १२।<br>१८०।६० | |
| जम्मा | ६६१।१० | ८९९। | १०९६।२० | |
| छैटौं वर्षको बालकलाई खर्च ब्याज | १५।<br>६६।१० | १५।<br>१४३।८० | १५।<br>२१९।२० | |
| जम्मा | ७४२।२० | १०५७।८० | १३३०।४० | |
| सातौं वर्षको बालकलाई खर्च ब्याज | १५।<br>७४।२० | १५।<br>१६९।१० | १५।<br>२६६। | |
| जम्मा | ८३१।४० | १२४१।९० | १६११।४० | |

| | | | | |
|---|---|---|---|---|
| आठौं वर्षको बालकलाई खर्च ब्याज | १८।<br>८३।१० | १८।<br>१९८।५० | १८।<br>३२२।२० | |
| जम्मा | ९३२।५० | १४५८।४० | १९५१।६० | |
| नवौं वर्षको बालकलाई खर्च ब्याज | १८।<br>९३।२० | १८।<br>२३३।२० | १८।<br>३९०।२० | |
| जम्मा | १०४३।७० | १७०९।६० | २३५९।८० | |
| दसौं वर्षको बालकलाई खर्च ब्याज | २४।<br>१०४।३० | २४।<br>२७३।४० | २४।<br>४७१।८० | |
| जम्मा | ११७२। | २००७। | २८५५।६० | |
| एघारौं वर्षको बालकलाई खर्च ब्याज | २४।<br>११७।२० | २४।<br>३२१।१० | २४।<br>५७१। | |
| जम्मा | १३१३।२० | २३५२।१० | ३४५०।६० | |
| बाह्रौ वर्षको बालकलाई खर्च ब्याज | २७<br>१३१।३० | २७।<br>३७६।३० | २७<br>६९०। | |
| जम्मा | १४७१।५० | २७५५।४० | ४१६७।६० | |

| | | | | |
|---|---|---|---|---|
| तेह्रौं वर्षको बालकलाई खर्च ब्याज | २७। १४७।१० | २७। ४४०।८० | २७। ८३३।४० | |
| जम्मा | १६४५।६० | ३२२३।२० | ५०२८। | |
| चौधौं वर्षको बालकलाई खर्च ब्याज | २७। १६४।५० | २७। ५१५।६० | २७। १००५।६० | |
| जम्मा | १८३७।१० | २७६५।८० | ६०६०।६० | |
| पन्धौं वर्षको बालकलाई खर्च ब्याज | ३०। १८३।७० | ३०। ६०२।४० | ३०। १२१२। | |
| जम्मा | २०५०।८० | ४३९८।२० | ७३०२।६० | |
| सोह्रौं वर्षको बालकलाई खर्च ब्याज | ३०। २०५। | ३०। ७०३।६० | ३०। १४६०।४० | |
| जम्मा | २२८५।८० | ५१३१।८० | ८७९२। | |

## फिरिस्त (घ)

१०० रुपैञा ९ वर्षसम्म बराबर शयकडा १० र १६ का दरको ब्याजमा लगाएको भए तपसिल बमोजिम जम्बा हुने रहेछ.

| असामी | शयकडा १० ब्याजमा लाए हुने | शयकडा १६ ब्याजमा लाए हुने | कैफियत |
|---|---|---|---|
| मूलधन | १००। | १००। | |
| पहिलो वर्षको ब्याज | १०। | १६। | |
| जम्बा | ११०। | ११६। | |
| दोस्रो वर्षको ब्याज | ११। | १८।५० | |
| जम्बा | १२१। | १३४।५० | |
| तेस्रो वर्षको ब्याज | १२।१० | २१।४० | |
| जम्बा | १३३।१० | १५५।९० | |
| चौथो वर्षको ब्याज | १३।३० | २४।९० | |
| जम्बा | १४६।४० | १८०।८० | |
| पाँचौ वर्षको ब्याज | १४।६० | २८।८० | |
| जम्बा | १६१। | २०९।५० | |
| छैटौं वर्षको ब्याज | १६।१० | ३३।४० | |
| जम्बा | १७७।१० | २४२।९० | |

| | | | |
|---|---|---|---|
| सातौं वर्षको ब्याज | १७।७० | ३८।७० | |
| जम्मा | १९४।८० | १८१।६० | |
| आठौं वर्षको ब्याज | १९।४० | ४४।९० | |
| जम्मा | २१४।२० | ३२६।७० | |
| नवौं वर्षको ब्याज | २१।४० | ५२।१० | |
| जम्मा | २३५।६० | ३७८।८० | |

## फिरिस्त (ङ)

| असामी....... | ७७ सालमा भएका सेन्ससबाट देखिएको लगत | | | | ८० सालमा बुझी आएको कमारा कमारीको लगत | | शयकडामा पर्ने संख्या | | कैफियत |
|---|---|---|---|---|---|---|---|---|---|
| | कच्ची पक्की फुस समेत घर संख्या | मानिसको संख्या | | | | | | | |
| | | करिया बाहेक जम्मा संख्या | करियाहरु मात्र | जम्मा जवान | धनी | कमारा कमारी जवान | जम्मा मानिसको संख्याबाट करिया शयकडा पर्ने | १ घरको १ धनी भए जम्मा घरको संख्याबाट करिया हुने धनीमात्रको संख्यामा शयकडा पर्ने | |
| ४ भञ्ज्याङ भित्र | ६४४४० | ३०५५८० | १३२९ | ३०६९०९ | ५३४ | १४०९ | १/२ | ४/५ | |
| ४ भञ्ज्याङ बाहिर | × १०३६१ | ५९८६० | २४१ | ६०१०१ | १०९ | २१४ | १/३ | १ | |
| | ७४८०१ | ३६५४४० | १५७० | ३६७०१ | ६४३ | १६२३ | | | |

| | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| | | | | ० | | | | | |
| पश्चिम १ नम्बर | ३८३९७ | १६३८९५ | १३५६ | १६५२५१ | ६०८ | १८९३ | १ | १ ३/४ | |
| पश्चिम २ नम्बर | १४५९७ | ७८१८८ | १०१५ | ७९२०३ | ४०३ | १०१७ | १ १/२ | २ ३/४ | |
| पश्चिम ३ नम्बर | १४९७६ | ८१२२५ | ९३५ | ८२१६० | ४७८ | १३८५ | १ १/२ | ३ | |
| पश्चिम ४ नम्बर | २९५२३ | १७९०७२ | ४३४५ | १८३४१७ | १४२८ | ५०८२ | २ २/४ | ५ | |
| पाल्पागुल्मी ८ जिल्ला समेत | ६३६१५ | ३७०२०७ | ६६९३ | ३७६९०० | २२०६ | ७४९२ | २ | ३ १/२ | |
| प्यूठान | २१३४५ | १२०३८७ | १६७६ | १२२०६३ | ५२७ | १६२९ | १ १/४ | २ १/२ | |
| दाङसल्ल्यान | ३६५३१ | २१३१९४ | ११३५ | २१४३२९ | २०० | १०२७ | १/२ | ३/४ | |
| डोटी | २४३३२ | १५२३२६ | ९०० | १५३२२६ | २७८ | १०३० | २/३ | १ | |

| | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| बैतडी डँडेलधुरा | ९११६ | ७७३०२ | ५९३ | ७७८९५ | १४५ | ५०७ | २/३ | १ १/२ | |
| दैलेख | ११७८९ | ८३७५० | ४२३ | ८४१७३ | ८७ | ३२३ | २/५ | २/३ | |
| जुमला | १४२९६ | ८८१३३ | ८८९ | ८९०२२ | ३८१ | १२२० | १ १/३ | २ १/२ | |
| | २७८५१७ | १६०७६७ ९ | १९९६० | १६२७६३ ९ | ६७४१ | २२६०५ | | | |
| राज्य कास्की लमजुं | २३७७५ | १३६०४४ | ३५२१ | १३९५६ ५ | १४८३ | ४२३६ | ३ | ६ | |
| ऐं फलावां | ७९० | ४४७५ | ५५ | ४५३० | २७ | १११ | २ १/२ | ३ १/४ | |
| ऐं बझाङ | ५८२१ | ४२५९६ | ४४७ | ४३०४३ | १०९ | ४९२ | १ | २ | |
| ऐं जाजर्कोट | १२१३७ | ७३५७९ | २९५ | ७३८७४ | ६९ | २४७ | १/३ | १/२ | |
| ऐं बाजुरा | २४८३ | १९८४९ | ३७१ | २०२२० | ५६ | ३६० | १ ३/४ | २/ | |
| | ४५००६ | २७६५४३ | ४६८९ | २८१२३ २ | १७४४ | ५४४६ | | | |

| | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| पूर्व १ नम्बर | ३९६६९ | २११३८१ | २३२२ | २१३७०३ | ८१० | २५६३ | १ १/४ | २/ | |
| पूर्व २ नम्बर<br><br>पूर्व ३ नम्बर | ३१७८५<br><br>२०६९९ | १७२९२१<br><br>१०४७६८ | ४१५१<br><br>३३३८ | १७७०७२<br><br>१०८१०६ | १३६६<br><br>१४७८ | ४७१८<br><br>५०४७ | २ ३/४<br><br>४ १/२ | ४/<br><br>७/ | |
| पूर्व ४ नम्बर | ४९९५८ | २६५१४५ | ४५२३ | २६९६६८ | १०११ | ३४४५ | १ १/४ | २/ | |
| धनकुटा | ५८७८४ | ३४९८१८ | ३२४४ | ३५३०६२ | १४०४ | ४३०७ | १ १/४ | २ १/२ | |
| इलाम | १४९७० | ८७०२८ | ४४७ | ८७४७५ | १५२ | ५१८ | ३/४ | १ | |
| <br><br>वीरगंज बारा | २१५८६५<br><br>७७०६५ | ११९१०६१<br><br>४१४५१५ | १८०२५<br><br>१४२ | १२०९०८६<br><br>४१४६५ | ६२२१<br><br>२३ | २०५९८<br><br>६९ | | | |

| | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| पर्सा रौतहट | | | | ७ | | | | | |
| महोत्तरी सर्लाही | ७१२७९ | ४७०९०० | ३९२ | ४७१२९२ | ४३ | १११ | | | |
| सप्तरी | ६२७६७ | ३७७४८३ | ३७२ | ३७७८५५ | ११५ | ३६८ | १ १/५ | १/५ | |
| उदैपुर | ९०३२ | ४८३९७ | ५१६ | ४८९१३ | १२६ | ५२५ | १ | १ १/३ | |
| मोरङ विराटनगर झापा | ३६२५७ | २११२४० | ६८ | २११३०८ | ४४ | १२१ | | | |
| खजहनी स्यूराज | १९१५६ | १२२२६९ | १४ | १२२२८३ | २ | ६ | | | |
| पाल्ही माझखण्ड | २८६४४ | १८४५५५ | २६ | १८४५८१ | ३ | ४ | | | |
| बाँके बर्दिया | १७४०५ | १०४४५५ | ११ | १०४४६६ | १ | ६ | | | |

| | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| कैलाली कन्चनपुर | ४७७७ | ४६८१५ | १ | ४६८१६ | | | | | |
| मकवानपुर | १०१०६ | ५६२९४ | २२२ | ५६५१६ | ७ | २५ | | | |
| काङदाङ | १४२५ | ९५५७ | २ | ९५५९ | ६ | १२ | | | |
| चितबन | २०८८ | २०५०६ | १४ | २०५२० | | | | | |
| सुनार | ३५१ | २७२६ | २ | २७२८ | | | | | |
| सुर्खेत | ३०६९ | १७२८९ | ३८ | १७३२७ | | | | | |
| | ३४३४२० | २०८७००१ | १८२० | २०८८८२१ | ३७० | १२४७ | | | |
| | ९५७६०९ | ५५२७७२४ | ४६०६४ | ५५७३७८८ | १५७१९ | ५१५१९ | | | |

×७७ सालका सेन्ससमा घरको संख्या बिरिएको देखिनाले ६७ सालको अङ्क लेखिएको छ.
साभारः कानून सम्बन्धी केही ऐतिहासिक अभिलेखहरु
कानून सहप्रकाशन, कानून व्यवसायी क्लब, काठमाडौं
प्रथम संस्करण, २०६३